# इतिहास-संस्कृति : केही पृष्ठहरू

लेखक

बिनोदराज शर्मा

प्रकाशक

स्टुडेण्ट्स् लाइब्रेरी

दरबार स्क्वायर, भक्तपुर - ११

# इतिहास- संस्कृति : केही पृष्ठहरू

लेखक

**बिनोदराज शर्मा**

प्रकाशक

STUDENTS LIBRARY

स्टुडेण्ट्स् लाइब्रेरी

दरबार स्क्वायर, भक्तपुर - ११

प्रकाशक : स्टुडेण्ट्स् लाइब्रेरी
दरबार स्क्वायर, भक्तपुर

प्रकाशन : प्रथम वि.सं. २०५७ जेष्ठ



मुद्रण संख्या : १००१ प्रति

मूल्य : रू. ३५।- व्यक्तिगत
रू. ६०।- संस्थागत

कम्प्युटर टाइप :
श्रीमती सुमा श्रेष्ठ (बनेपाली)
फोन नं. : ६१२७२४

प्रेस :
हाडा प्रिन्टर्स
पुतलीसडक, काठमाडौं
फोन नं. : ४३६२०५

# प्रकाशकीय

वि.सं. २०४६ सालमा भक्तपुरका युवा विद्यार्थीहरूद्वारा शैक्षिक तथा सामाजिक क्षेत्रको विकास गर्ने उद्देश्यले स्थापित स्टुडेण्ट्स् लाइब्रेरीले स्थापना कालदेखि नै पुस्तकालय सेवाका अतिरिक्त विद्यार्थी, युवा वर्ग र बौद्धिक वर्गका लागि विभिन्न सिर्जनात्मक र रचनात्मक कार्यक्रमहरू सञ्चालन गर्दै आइरहेको छ। यसै क्रममा विगत सात वर्षदेखि विविध विषयको जानकारी दिने उद्देश्यले "जानकारी" पत्रिका पनि प्रकाशित गर्दै आइरहेको तथ्य सर्वविदितै छ।

यिनै प्रक्रियालाई निरन्तरता दिंदै लाइब्रेरीले यस पटक पुस्तक प्रकाशन जस्तो महत्त्वपूर्ण र गरिमामय कार्यको थालनी गरेको छ। इतिहास, धार्मिक र संस्कृति विषयका अनुसन्धानकर्ता बिनोदराज शर्माको यस "इतिहास-संस्कृति : केही पृष्ठहरू" पुस्तकमा विभिन्न इतिहास, धर्म, संस्कृति, सम्पदा विषयका अनुसन्धानात्मक र महत्त्वपूर्ण लेखहरू रहेका छन्। जुन लेखले सम्बन्धित विषयका अध्ययन र अनुसन्धानकर्ताका अलावा सर्वसाधारणहरूलाई समेत यथेष्ट जानकारी र ज्ञान हासिल गर्ने सुअवसर मिल्नेछ भन्ने कुरामा लाइब्रेरी बिश्वस्त छ।

शर्माका प्रायजसो लेखहरू विगतमा थुप्रै पत्रपत्रिकाहरूमा प्रकाशित भइसकेका छन्। तिनै प्रकाशित रचनाहरूका साथै अन्य लेखहरूलाई समेत संग्रहित गरी एउटा गहकिलो पुस्तकका रूपमा प्रकाशित गर्न पाउँदा लाइब्रेरी अत्यन्त गौरवान्वित र हर्षित छ।

यो पुस्तक प्रकाशित गर्नुको उद्देश्य उहाँ जस्तो इतिहास, संस्कृति विषयका ज्ञाताको लेखकीय प्रतिभालाई कदर र सम्मान गर्नुका साथै ऐतिहासिक नगरी भक्तपुरको प्राचीन सम्पदा, जात्रा, पर्व, ऐतिहासिक व्यक्तित्वका बारेमा तथ्यमूलक कुराहरूलाई सबै सामु सुसूचित गरी उजागर गर्नु पनि रहेको छ।

यस्तो पुस्तक प्रकाशित गर्ने सुअवसर पनि यही प्राचीन तथा ऐतिहासिक नगरी भक्तपुरको दरबार स्क्वायरमा अवस्थित लाइब्रेरीले गर्न पाएकोमा आफूलाई सौभाग्यशाली ठान्दछ र पुस्तक प्रकाशकको रूपमा स्थापित हुन पाएकोमा थप सन्तुष्टी व्यक्त गर्दछ।

स्टुडेण्ट्स् लाइब्रेरी

दरवार स्क्वायर, भक्तपुर - ११

# मन्तव्य

नेपालको इतिहास तथा संस्कृतिको क्षेत्रमा बिनोदराज शर्मा कुनै नौलो नाउँ होइन । विगत केही वर्षदेखि उहाँका लेखहरू विभिन्न पत्रपत्रिकामा प्रकाशित हुँदै आएका छन् । युवा लेखक तथा अन्वेषक श्री शर्माद्वारा लिखित विभिन्न उन्नाइस वटा खोजपूर्ण लेखहरू समावेश भएको यस ग्रन्थ "इतिहास र संस्कृति : केही पृष्ठहरू" को प्रकाशन नेपालको इतिहास तथा संस्कृतिमा अभिरुचि राख्ने सबैका लागि खुशीको विषय हो ।

करिब तीनसय वर्षसम्म समस्त नेपालको राजधानी बन्ने सौभाग्य पाएको भक्तपुरको आफ्नै गौरवमय इतिहास छ र साथै यसले नेपाली कला र संस्कृतिको क्षेत्रमा अन्तर्राष्ट्रिय जगतमा आजसम्म प्रतिनिधित्व गर्दै आएको सर्वविदित छ । त्यसकारण यो देशको इतिहासमा राजनीतिक, धार्मिक तथा सांस्कृतिक दृष्टिबाट विशेष रूपमा प्रेरणादायक भएको छ तापनि यसको यथार्थ इतिहासको खोजी र प्रकाशन यथेस्ट रूपमा हुन सकेको छैन । नेपालको मध्यकालीन इतिहासको गौरव गाथा बोकेको तत्कालीन भक्तपुरसँग सम्वन्धित विभिन्न पत्रपत्रिकामा प्रकाशित लेखहरूको संगालोको रूपमा यो ग्रन्थ प्रस्तुत भएको छ । यसका लागि प्रकाशक स्टुडेण्ट्स् लाइब्रेरी, भक्तपुर धन्यवादको हकदार भएको छ । निश्चय पनि यस कृतिले नेपालको इतिहास तथा संस्कृतिमा अभिरुचि राख्ने सबै इतिहासकार, विद्वान्, अन्वेषक, शिक्षक, विद्यार्थी वर्गमा भक्तपुरको इतिहास तथा संस्कृति प्रति जिज्ञासा जगाउन सफलता पाउने छ भन्ने कुरामा म विश्वस्त छु ।

यस पुस्तकमा समावेश भएका सबैजसो लेखहरू भक्तपुरको मध्यकालीन इतिहाससँग सम्वन्धित छन् र विद्वान लेखकद्वारा स्थलगत भ्रमण तथा अन्वेषण गरी विभिन्न अभिलेख तथा ऐतिहासिक सामग्रीहरूका आधारमा यी महत्त्वपूर्ण लेखहरू प्रस्तुत गरिएका हुन् । यसमा प्रतिपादित सवै विचारहरूसित सबैको समान सहमति होला भन्ने होइन, लेखकको व्याख्या तथा ठम्याई अन्तिम नहुन सक्छ । तर यसमा प्रस्तुत कैयन् नयाँ व्याख्या विचारणीय छन् । तथ्यको आधारमा अरू प्रामाणिक व्याख्या भएमा संशोधन पनि हुन सकिएला । साथै, यसलाई बढी प्रामाणिक बनाउनका लागि यसमा उद्धृत अभिलेख तथा सामग्रीहरूको चित्र प्रतिलिपिहरू पनि समावेश गरिएको भए सबैका लागि अझ उपयोगी हुने थियो ।

अन्त्यमा, उत्साही अन्वेषकका यत्रतत्र छरिएर रहेका लेखहरू सङ्कलन गरी बडो मेहनतका साथ पुस्तकको रूपमा प्रकाशित गर्ने स्टुडेण्ट्स् लाइब्रेरी प्रति हार्दिक धन्यवाद ज्ञापन गर्दै लाइब्रेरीको उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।

| | |
|---|---|
| २०५७/२/१९ | डा. गोविन्द मास्के |
| भक्तपुर बहुमुखी क्याम्पस, भक्तपुर | सहप्राध्यापक |

# लेखकीय मन्तव्य

नेपाल विश्व मानचित्रमा भौगोलिक रूपमा सानो छ । त्यस्तै भक्तपुर पनि नेपालको नक्शामा सानो छ तर भौगोलिक रूपमा सानो हुँदैमा कला, संस्कृति र इतिहास पनि सानै हुन्छ त ? यो कदापि हुन सक्दैन । सानोले ठूलो काम गरे ठूलो हुन्छ न कि आकार प्रकारले । भक्तपुर पनि सानै भए पनि नेपाल मण्डलको राजधानी भइसकेको इतिहास छ र तत्कालीन मल्ल शासकहरूका गुरू पुरोहित भइ देशको इज्जत गौरव बढाएका राजोपाध्यायहरूको पनि आफ्नै इतिहास छ । देशमा संस्कृतिको प्रचार-प्रसार गरी एक समृद्धशाली समाजको संरचना गरेको इतिहास पनि त्यत्तिकै छ । शाहकाल अघि नेपाल नेपा थियो, नेवा थियो । यहाँका निवासी तमाम जनता नेपामी थिए, नेवा थिए । त्यसकारण नेपालको राष्ट्रियता नेवा मानिएको देखिन्छ । सवै जनता नेवा थिए । जातजाति, भाषाभाषी धेरै थिए । एकतामा अनेकता र अनेकतामा एकता भने जस्तै नेपालका सबै जनता अनेकतामा एकताको अनुरूप नेवा थिए र एकतामा अनेकता अनुरूप सवैप्रकारका जातजाति, भाषाभाषी, धर्म सम्प्रदाय आपसी समन्वयका साथ बसेका थिए तर मल्लकालको समाप्तिपछि राजनीतिक आधिपत्य र शासन मात्र कायम भएन वरू जातजाति, भाषाभाषीहरूको मौलिकतामा नै परिवर्तन गरी राष्ट्रिय एवम् जातीय गौरव पनि समाप्त गर्ने अभियानै सञ्चालन भए । जसको मार हामी सबैलाई परेको छ । मल्ल राजा, राजगुरू, पुरोहित एवम् उच्च भाइ भारदारहरूको पद र प्रतिष्ठा मात्र गुमेन बरू सम्पूर्ण अस्तित्व नै छिन्नभिन्न गरियो । मल्ल राजा र राजपरिवार राजलवट, प्रधानाङ्ग आदि हुनुपर्‍यो । राजगुरू पुरोहित पनि नेवार ब्राम्हण, द्यौभाजु हुनुपर्‍यो । उच्च भाइ भारदारहरू श्रेष्ठ हुनुपर्‍यो र धेरै चल-अचल सम्पत्ति र इतिहास एवम् अस्तित्वको अमोघ प्रमाण धर्मशास्त्र, वंशावली आदि इतिहास बोक्ने थ्यासफु, ताडपत्रहरू सवै लुटिए, हडपिए वा नष्ट गरिए । मात्र नाम र अस्तित्व वाँकी भई लुकिछिपी हिंड्दै आजको अवस्थामा पुग्दा पनि हामी आफ्नै इतिहास र संस्कृतिको खोजीमा छौं । तसर्थ यस्तो विषयमा लागी सर्वप्रथम सानै प्रयास भए पनि **"इतिहास - संस्कृति : केही पृष्ठहरू"** नामक किताब नामैले विषय ज्ञात हुने रूपमा Students' Library भक्तपुरवाट प्रकाशित भएकोमा म ज्यादै हर्षित छु । आर्थिक भार र झमेला वोक्न नपरेको कारणले मात्र होइन कि भक्तपुरमा SL जस्तो बहुउद्देश्यीय रूपमा निरन्तरताका साथ सञ्चालित शैक्षिक संस्थावाट यसको प्रकाशन भएको कारणले खुशी एवम् गौरवान्वित छु । म पनि सल्लाहकार एवम् आजीवन सदस्यको रूपमा SL को सेवा गर्दैछु र यो जस्तो भक्तपुरका युवाहरूको शैक्षिक तथा सामाजिक विकास गर्नमा र विद्यार्थीहरूमा स्व-अध्ययनको बानी बसाल्न अभिप्रेरित गर्ने सामाजिक संस्था भक्तपुर नगर, जिल्लामै छैन जस्तो मलाई लाग्छ ।

यो पुस्तकमा स्थान परिचय, पूजाक्रमको विवरण र इतिहास, संस्कृति एवम् कला, परम्पराको बारेमा लेखेको छु । जसबाट केही हदसम्म सत्य-तथ्य कुराको प्रकाश हुन्छ । सबै कुरा इतिहासमा लेखिएको हुँदैन र सबै इतिहास लेखिएको पनि छैन । त्यसकारण नेपालको विशुद्ध इतिहास पूर्ण रूपमा तयार भएकै छैन । अध्ययन, अनुसन्धानमा लागी परेकाहरू, इतिहासकार र जिज्ञासु सबैले यो क्षेत्रमा ध्यान दिनुपर्दछ । अनि मात्र लुकेका, हराएका र लुकाइएका इतिहास र त्यसको रहस्य उदयमान, प्रकाशमान हुन्छ । त्यसकारण इतिहासकारहरू, इतिहासका विद्यार्थीहरूले कुनै पनि आग्रह, पूर्वाग्रह नराखी वास्तविक कुरा पत्ता लगाउन आफ्नो योग्यता र क्षमता प्रयोग गर्नुपर्छ भन्ने मेरो विचार छ । यही भावना अनुरूप मैले आफ्नो किताबलाई तयार पारेको छु । राजा, महाराजा, शूरवीर र पराक्रमीहरूको गौरव गाथा, विजय यात्रा, जीवनी मात्र इतिहास होइन विजयी र पराजित दुवैको समान मूल्याङ्कन, विवरण नै इतिहास हो भन्ने कुराको आधार पनि मैले लिएको छु ।

भक्तपुर दरबार स्क्वायर, दथुबाहा चोकको एक छिंडीमा रहेको SL ले प्रकाशन गरेको यो किताबलाई सही मानेमा किताबको रूप दिन SL का पूर्व अध्यक्ष श्री सुरेन्द्रकाजी प्रधानाङ्गको ठूलो योगदान रहेको छ । मेरा लेखहरू धेरै पत्रपत्रिकामा मात्र देखी सबै सङ्कलन गरी पुस्तकांकारको रूप दिने उत्तम विचार उहाँले मेरो घरसम्म आई प्रकट गर्नुभयो । जसबाट म खुशी मात्र भइन बरू इतिहास र संस्कृतिको क्षेत्रमा कलम चलाउने, अनुसन्धानकर्ताको उचित मूल्याङ्कन पनि भएको पाएँ । यस्तो मूल्याङ्कन सरकारी, गैर-सरकारी र जन प्रतिनिधिहरूको संस्थाले गर्नुपर्थ्यो, गर्दै जानुपर्थ्यो । त्यस उसले SL जस्तो आकारमा सानो भए पनि काम र विचारमा ठूलो संस्था तथा भाषा, व्याकरण हेरी सहयोग गर्नु हुने सुरेन्द्रकाजीलाई सर्वप्रथम म धन्यवाद ज्ञापन गर्दछु । साथै पुस्तक प्रकाशनमा प्रुफ हेर्नेदेखि लिएर प्रशस्त सहयोग गर्नु हुने SL का सचिव श्याम हाडा र प्रुफ हेरी धेरै मेहनत गर्ने जितेन्द्र कायस्थलाई पनि धन्यवाद ज्ञापन गर्दछु । साथै SL का सल्लाहकार मित्रहरू श्री शरद राजोपाध्याय, नरेन्द्रप्रसाद जोशी तथा इतिहास, संस्कृति विषयमा खोज अनुसन्धान गर्दै आउनु भएका र मलाई सधैं सहयोग गरिरहेका मिलनसार मित्र डा. पुरूषोत्तम लोचन श्रेष्ठलाई पनि धन्यवाद छ । उहाँबाट मैले यो किताब लेखनमा धेरै सहयोग र सल्लाह पाएको छु । सरस्वती विद्यागृहदेखि भक्तपुर क्याम्पसमा पढाउनु भएका आदरणीय डा. गोविन्द मास्के ज्यूमा आदर भाव र किताबको भूमिका लेखनका लागि धन्यवाद पनि प्रकट गर्दछु । इतिहास विषय पढ्ने प्रेरणा उहाँबाटै मैले पाएको हुँ । यसरी नै पुस्तक प्रकाशक SL का वर्तमान अध्यक्ष श्री सुरेशबहादुर कायस्थ, किताब मुद्रण क्षेत्रमा कम्प्युटर टाइप गर्ने श्रीमती सुमा श्रेष्ठ (बनेपाली) र हाडा प्रिन्टर्स, काठमाडौंलाई पनि धन्यवाद छ । मेरा शुभ-चिन्तक, घर-परिवार एवम् SL परिवारलाई पनि हार्दिक धन्यवाद ज्ञापन गर्दछु । अन्तमा किताबमा भएका गल्ती एवम् त्रुट्रिहरू पत्ता लगाई आलोचना, सल्लाह, सुझाव दिई सहयोग गरी दिनुहुन विज्ञ पाठक, शुभ-चिन्तक एवम् साथीभाइहरूमा अनुरोध गर्दछु ।

२०५७ वैशाख २४ गते — बिनोदराज शर्मा

अक्षय तृतीया — इपाछें, भक्तपुर - १३

# विषयसूची

# ख्वप लाय्कू - एक सेरोफेरो

"ख्वप लाय्कू" भनेको भक्तपुर दरबार चोक अर्थात Bhaktapur Durbar Square हो । "ख्वप लाय्कू" यी दुई शब्द नेवार भाषाका हुन् । नेवारी भाषामा आजसम्म पनि भक्तपुरलाई ख्वप र दरवार चोकलाई लाय्कू भन्ने प्रचलित मात्र छैन प्रख्यात पनि छ । ख्वप र लाय्कू दुवै शब्द पुराना हुन् । इतिहासको अध्ययनको क्रममा प्राचीन नामहरूको बारे अध्ययन गर्दा यसको पुष्टि हुन्छ । भक्तपुर नगरको प्राचीन नाम "खोपृङ" थियो ।

जुन कुरा लिच्छबीकालीन शिलाभिलेखका प्रमाणहरूबाट स्पष्ट हुन्छ । "ख्वप" शब्द जुन आज भक्तपुर नगरलाई जनाउने नेवारी भाषाको शब्द लोकप्रिय भइसकेको छ, त्यही खोपृङको परिवर्तित रूप हो । जुन शब्द किराँतकालमै लोकप्रिय भइसकेको कुराको उल्लेख सर्वप्रथम देउपाटनको मानदेवको पालामा रत्न संघ (हिन्दू धर्ममा पनि संघ, विहार, बहाहरू छन् ।) द्वारा स्थापित शिवलिङ्गको अभिलेखमा परेको देखिन्छ । जसमा "खोपृङ ग्राम प्रदेश" भक्तपुरको गोल्मढी टोलको शिवदेव, अंशुवर्माको बि.सं ६५१ को अभिलेखमा "माखोपृङ" र शिवदेव, अंशुवर्माको भक्तपुर तालाको कुम्हाले टोलको र तुलाछेँ टोलको अभिलेखहरूमा "माखो दुलु", "खृपुङग्राम" आदि शब्दको प्रयोग भएको देखिन आएको छ ।

यसवाट के कुरा प्रष्ट हुन्छ भने भक्तपुरलाई खोपृङ भनिएतापनि यो नगर अन्तर्गत विभिन्न स्थानहरू अझ वा भनौं टोलहरू या बस्तीलाई बुझाउने अर्थमा माथिका शब्दहरू प्रयोग भएको भन्न सकिन्छ । मुख्य शब्द "खोपृङ" र माथिका अन्य शब्दहरू कालान्तरमा गएर ख्वपो, ख्वप्व आदि हुदै परिष्कृतरूपमा आज हामी "ख्वप" भनिरहेका छौ ।

"लाय्कू" शब्द राजकुलको अपभ्रंश हो भनि भाषाशास्त्रीहरू उल्लेख गर्दछन् । राजकुल भन्नु राजाको घर वा वासस्थान र अर्को अर्थमा राजाले कुलदेवताको रुपमा मान्नु पर्ने देवी देवताको मन्दिर भन्ने पनि अर्थ लाग्छ । त्यस्तै नामको पछाडि "राज" शब्द प्रत्यय जस्तै गरी राख्ने व्यक्तिहरू (प्रायश: राजोपाध्याय ब्राम्हणहरू) को इष्टदेवताको स्थानको रूपमा पनि राजकुलको अर्थ लाग्दछ । तसर्थ "वन्हि राज" नामक ब्राम्हण (राजोपाध्याय ब्राम्हण) ले भक्तपुरको दत्तात्रय मन्दिरको बायाँपट्टि चोकभित्र एक राजकुल स्थापना गरेको कुरा त्यहाँ गरिने सम्पूर्ण कर्मकाण्डमा "वन्हिराजकुल भट्टारक" भन्ने शब्दको प्रयोगले स्पष्ट हुन आउँछ ।

यसप्रकार "ख्वप लाय्कू" भक्तपुर दरवार चोक (Bhaktapur Durbar Square) प्रकारान्तरले हुन गएको कुरा स्पष्ट हुन्छ । अब ख्वपबारे अहिलेसम्म प्रकाशमा नआएको

(शायद !) शब्दार्थ प्रस्तुत छ । भक्तपुर शहर प्राचीन कालदेखि विकसित हुँदै बिभिन्न नाम धारण गर्दै ग्राम (गाउँ) नगर (शहर) हुँदै महानगर र समस्त नेपाल अधिराज्यकै राजधानी शहरसम्म भइसकेको कुरा भक्तपुर तलेजुभित्र मूल चोकको सुवर्णद्वारको दायाँ बायाँ रहेको स्वर्ण पत्रबाट स्पष्ट हुन्छ । ख्व-खों, को अर्थ सीमाना जोडिएको मुख्य स्थान केन्द्र बिन्दु हो र "प" को अर्थ स-साना पवित्र वस्ती (कविला जस्तो) हो । भक्तपुरका प्राचीन बासिन्दाहरू अर्थात् बुढापाकाहरू "ख्वप" लाई ६० वटा स-साना वस्तीहरूको संयुक्त रूप ख्वी-प नै ख्वप हो भनि आफ्ना पुराना संस्मरणहरूको आधारमा वताउँछन् । जुन कुरा समसामयिक एवम् महत्त्वपूर्ण र संवेदनशील पनि देखिन्छ ।

खों (ख्व) भनेको खोलाको अर्थमा भक्तपुरमा "खो" लाई लिन सकिन्छ - उदाहरणको रूपमा 'खों' भन्नु दोभान २ वटा खोला जोडिएको स्थान र ह्व को अर्थ तीर्थ (खोला) हो । त्यस्तै स-साना बस्तीहरू पहिले आफ्नो अलग सीमाना कायमगरी बसेकाहरूलाई एकीकृत रूपमा बसाइएको खों (ठूलो रूपमा) नै पछि "ख्व" भयो र "प" पवित्र भूमिको समग्ररूप ख्वप र भक्तपुर शब्दको अर्थान्वेषण भावमा एकरूपता कायम भएको देखिन्छ ।

"भक्त" शब्दको अर्थ धार्मिक आस्थावान समुदाय र हामीले दिनहुँ खाने पाकेको भात हो । "पुर" को अर्थ वस्ती, स्थान हो । तसर्थ ख्वपमा "ख्व" धार्मिक आस्थाको कारणले एकीकृत भएको सीमानाको केन्द्र विन्दु र "प" पुर पवित्र स्थान भन्ने अर्थ पुराना ग्रन्थ लेखहरूको अध्ययनले पुष्टि हुन्छ । त्यसकारण भक्तपुर भक्तहरूको वस्ती, भात खान धन्दा नहुनेहरूको बस्ती भन्ने अर्थ भावले तत्कालीन समयमा भक्तपुर खाद्यान्नमा आत्मनिर्भर र धार्मिक स्वभावका जनताहरूको गौरवशाली स्थान देखिन आउँछ ।

जब खान पिउन र लाउन धन्दा हुन्दैन तब अरू विषयतिर ध्यान जानु स्वभाविक हुन्छ । जसको परिणाम भक्तपुरमा कला, संस्कृति र सम्पदाहरूको व्यापक रूपमा विकास भयो । लिच्छवीकालमा कला संस्कृतिको र अन्य विषयको विकासले गर्दा इतिहासमा यसलाई स्वर्ण युग भनियो । पछि मल्ल कालमा पनि यो विकासक्रमले निरन्तरता नै पायो । जसमा भक्तपुर नगरको भूमिका महत्त्वपूर्ण मान्नु पर्छ । यही क्रममा भक्तपुरमा धेरै धार्मिक, सामाजिक, एवं ऐतिहासिक निर्माण एवं विकासका क्रियाकलापहरू प्रशस्त भएका छन् । जसको केन्द्र बिन्दु "ख्वप लाय्कू" नै प्रत्यक्ष वा परोक्षरूपले रहेको पाइन्छ । जसको सेरोफेरोमा प्रस्तुत लेखले यथाशक्य जानकारी प्रदान गर्ने जमर्को गर्दछ ।

नेपालको विशेषता राष्ट्रिय अन्तर्राष्ट्रिय क्षेत्रमा नै यो देशको प्राचीन तथा ऐतिहासिक सम्पदा र प्राकृतिक स्रोत सम्पदा नै मान्नु पर्छ । यही प्राचीन कला, संस्कृति सम्पदा र परम्पराहरूप्रतिको आकर्षण नै आज पर्यटकहरू नेपालमा ओइरिनुका कारण प्रमुख रूपमा देखा परेको छ । जसलाई सदुपयोग गर्दै नेपाल सरकारले "नेपाल भ्रमण वर्ष

१९९८" मनाउनुबाट पनि उपयुक्त कुराको सपुष्टि हुन्छ । विदेशी पर्यटकहरू यहाँ अत्याधुनिक सुख सुविधा उपभोग गर्न, वैज्ञानिक आबिष्कारका नयाँ नयाँ कीर्तिमान् आदि हेर्न आएका हैनन् । जुन कुरा त ती सम्पन्न देशहरूमा नै मनग्य छन् । त्यसकारण नेपालको पर्यटन उद्योग र व्यवसायको मूल तत्त्व कलाकृतिको अनुपम रमणीय विविधता र ऐतिहासिक तथा प्राचीन सम्पदा मात्रै हुन् । यस्ता राष्ट्रिय पहिचान र आयस्रोतको निश्चित एवम् निर्विकल्प साधनहरूको उचित र न्याय संगत रूपमा संरक्षण, सम्बर्द्धन गर्नु आज देशको आवश्यकता भइसकेको छ । यस बाहेक नेपालमा पर्यटन विकास र राष्ट्रिय विकास अवरूद्ध प्राय: देखिन्छ । यस विषयमा भक्तपुर शहर विशेषत: "ख्वप लाय्कू" ले महत्त्वपूर्ण स्थान ओगटेको मान्नुपर्छ । यही परिप्रेक्ष्यमा भक्तपुर एक महत्त्वपूर्ण नगर (शहर) मान्न सकिन्छ । जसले प्राचीन सम्पदाले परिपूर्ण भएर आधुनिकता रूपी तेज बहाव सामु घुडा नटेकी आफ्नो प्राचीन एवम् ऐतिहासिक अस्तित्वलाई कायम राख्न सफल भएको छ तर यस्तो नगरीलाई सरकारी संचार माध्यम रेडियो नेपाल, नेपाल टेलिभिजन एवम् अन्य निकायले उपत्यकाको कान्छो नगर तर कला संस्कृतिको क्षेत्रमा वृद्धपन बोकेको" भनेर भन्नु भक्तपुरलाई खिल्ली उडाएको, अपमान गरेको मात्र नभई पूर्वाग्रही दृष्टिकोणले व्यवहार गर्ने सरकारी नीति कै परिणति त होइन भन्न कर लाग्छ । भक्तपुर कान्छो नगर भए जेठो, माहिंलो कुन हो ? स्पष्ट पार्न सक्नुपर्‍यो । २००७ साल अघिको कुरा गर्ने हो भने भक्तपुर जिल्ला अन्तर्गत साँखु, नाला बागमती नदी पूर्व र हालको त्रिभुवन विमानस्थल वरपरका सबै क्षेत्र पर्दथ्यो । जसलाई माथि उल्लेखित भक्तपुर नगरलाई पूर्वाग्रही दृष्टिले हेर्ने सरकारी (तत्कालीन) नीतिले नै गर्दा साघुँरिदै आज अधिराज्य कै सानो जिल्लाको रूपमा रहन बाध्य तुल्यायो । जसरी पृथ्वीनारायण शाहले भक्तपुर कब्जा गरिसकेपछि यहाँको कला संस्कृतिदेखि सांस्कृतिक विकास ठप्प भएको थियो ।

भक्तपुर एउटा वस्ती, गाउँ, शहर, नगर र जिल्ला मात्रै नभएर नेपालकै एक महत्त्वपूर्ण ऐतिहासिक तथा सांस्कृतिक मूल स्थान भएको कुरा निर्विवाद छ । यही परिप्रेक्ष्यमा डा. पुरुषोत्तम लोचन श्रेष्ठज्यूको भनाई "वि.सं. १२०४ मा राजा आनन्ददेवको पालामा आइपुग्दा समग्र नेपाल अधिराज्यकै राजधानीको रूपमा व्यवस्थित बन्न पुग्यो । यसपछि भक्तपुर राजनीतिक प्रशासनिक दृष्टिले मात्र नभएर धार्मिक, सांस्कृतिक दृष्टिले पनि मूल थलोको रूपमा देखा परेको थियो ।" निकै महत्त्वपूर्ण तथा प्रासंगिक देखिन्छ । हिन्दू परम्परा र वास्तु शिल्पकला शास्त्रअनुसार शंखको आकारमा रहेको भक्तपुर तन्त्रशास्त्रअनुसार यन्त्राकार भएको बुझिन्छ । जुन यन्त्र विन्दु, त्रिकोण, अष्टकोण भुपुर आदिले संयुक्त भई बनेको छ । यो तान्त्रिक अवधारणानुसार त्रिपुरसुन्दरी, त्रिकुण्ड गणेश, अष्ट गणेश, अष्ट सिद्धि, दश महाविद्या, अष्ट मातृका, अष्ट भैरव र चतुदिक्सहित प्राकृतिक, सांस्कृतिक वैभवहरू प्रतिस्थापित छन् । जुन स्थापना नगर निर्माणका पूर्वाधारको रूपमा भौगोलिक र तान्त्रिक दुवै दृष्टिले तादात्म्यता मिलाई वनाइएको छ । भक्तपुर वडा नं. १३ इपाछें टोल निवासी

पं. रत्नराज राजोपाध्यायज्यूसित उपरोक्त तान्त्रिक कुराहरू समावेश भएको तान्त्रिक नक्शा सुरक्षित छ । उक्त तान्त्रिक नक्शाको भावनाअनुसार भक्तपुर नगर निर्माण कालमा मुख्य देवी देवता बीच केन्द्र विन्दुमा प्रतिस्थापित गरी अरू गण परिवार देवी देवताहरू विभिन्न घेराबन्दीमा सुरक्षा पंक्तिको रूपमा तिनीहरूको गुण र शक्तिअनुसार स्थापना भएको देखिन्छ । यस्तै भौगोलिक बनावट शंखको आकारअनुसार बीचको भागमा मुख्य देवी तलेजु भवानी सिद्धिलक्ष्मी देवी विराजमान गराई आगम् मन्दिर राजदरबार, राजा र गुरू पुरोहित (राजोपाध्याय ब्राम्हणहरू) र उच्च पदस्थ भाइ भारदारहरू त्रिकोणभित्र बस्ने व्यवस्था भएको देखिन्छ । यसरी शंखको आकारअनुसार चारैतिर भिरालो पर्ने स्वरुप अनुसार विभिन्न तहका जाति एवम् थरका बासिन्दाहरूको बस्ती विस्तार गर्दै शहरको छेउमा खोलाको किनारमा देवी देवता पनि उग्र स्वभावका र जनताहरू पनि जातमा तल्लो मानिए तापनि बलिया बफादार जे काम गर्न पनि तयार हुनेहरूलाई राखिएबाट यो व्यवस्था ज्यादै महत्त्वपूर्ण र उचित रूपमा गौरवपूर्ण देखिन आउँछ । यसप्रकार "ख्वप लाय्कू" को सेरोफेरो गर्दा यो क्षेत्रको विवरण र सीमाना महत्त्वपूर्ण हुन आउँछ । तसर्थ यस विषयमा विचार गर्दा भक्तपुर दरबार चोक (Bhaktapur Durbar Square) भ.न.पा.का वडा नं १०, ११, १२ र १३ का विभिन्न क्षेत्रहरू बीच पर्दछ । अर्को शब्दमा यी ४ वडालाई दरबार चोकले छोएको छ । पूर्वमा यालाछें टोल, बालाखु गणेश मन्दिर, विद्यार्थी निकेतन मा.वि., चतुर्वर्ण विहार, टौमढी टोलमा धौभडेल परिवारको पु:बहा क्षेत्र पर्दछ । दक्षिणमा टौमढी टोलबाट स्वाँमला गल्ली हुँदै इच्छु टोल किसिमन्हय गल्ली, कोलाछें बिजुक्छें आगम्सम्म पुग्छ । पश्चिममा कोलाछेंबाट लाछिचाको पूर्व भाग खौमा ढोकासम्म र महेन्द्र पार्क, इन्द्रायणी पीठ जाने बाटोको दायाँपट्टिको सबै क्षेत्रसहित नयाँ पर्यटक मोटर पार्कको पूर्वसम्म ओगटेको छ भने उत्तरमा श्री पद्म मा.वि. बाट उत्तरतिरका सबै पाखा क्षेत्र छ । त्यस्तै यालाछेंको याँला तँ उकालोबाट माथि आउँदा दायाँपट्टिका सबै भाग र बालाखु गणेश पुग्ने गल्लीका पश्चिम भागका सबै क्षेत्र दरबार चोकभित्र पर्न आउँछ भन्ने कुरा विभिन्न कार्यालय र निकायबाट ज्ञात हुन आएको छ । माथि उल्लेखित क्षेत्रभित्रका ऐतिहासिक, धार्मिक मन्दिर, क्षेत्र एवम् सम्पदाहरूका बारेमा संक्षिप्त चर्चा गर्नु प्रासंगिक एवम् अत्यावश्यक हुन आउँछ । जसबाट यो क्षेत्रबारे सर्वसाधारणलाई धेरै जानकारी प्राप्त हुने विश्वासले नै यो लेख तयार गरिएको छ ।

दरबार हेरचाह तथा स्मारक संरक्षण कार्यालयले दरबार चोकको सीमाना निर्धारण गरे अनुरूप केही हदसम्म ती सबैलाई समेट्ने प्रयास ख्वप लाय्कू अन्तर्गत राखिएको छ । यस क्षेत्रभित्र रहेका महत्त्वपूर्ण स्थान परिचयसहित वर्णन गरिन्छ ।

## १. तलेजु मन्दिर क्षेत्र

तलेजु भन्नासाथ विश्व प्रख्यात सुवर्णद्वार (Golden Gate) बाट भित्र रहेको तलेजु भवानीको मन्दिर र अन्य चोक, देवी देवता, धारा, पोखरी, डबली आदि संयुक्त भएको क्षेत्र भनी बुझिन्छ । राजदरबार र तलेजुको मूलद्वारको रूपमा रहेको सुवर्णद्वारा ने.सं. ८७४ मा रणजीत मल्लले स्थापना गरेका हुन् । जुन द्वारको दायाँ बायाँ माथिबाट तल १ जोडी भोजन मुद्राको महाकाली, गणेश, कुमार, भैरव र भगवती, कलश १ जोडी, कुवेर र शक्तिन् कुवेर, सिंह १ जोडी, ढोकाको दायाँ बायाँ २ वटा स्वर्णपत्र र ढोकामाथि तोरणमा गंगा जमुना सहित ४ शिर १० हातका दुर्गा भवानी तलेजु रहेका छन् । यस माथि छानाको धुरीमाथि ३ वटा कलश गजुरको रूपमा र तोरण, ध्वजा, छत्र, दण्ड, खड्गसहित २ हात्ती, २ सिंह आदिले सुवर्णद्वार मनमोहक देखिन्छ । यी ३ वटा कलश गजुर त्रिपुरसुन्दरीका प्रतीक भएको र यसकै कारणबाट "त्रिपुर राजकुल" भन्ने पनि चलन चलेको मानिन्छ । सुवर्णद्वारको दायाँ बायाँ स्वर्णपत्र मुनि दुवैतिर २ वटा अष्ट मंगलयुक्त अष्ट कलश निकै कलात्मक देखिन्छ तर आजभोलि यो कलशको अगाडि ढुङ्गाको डवलीमा २ वटा तामाको घडामा पानी राखी त्रिखुट्टी माथि राख्ने प्रयास शुरू भएको छ । जसबाट अष्टमंगल युक्त कलशको मात्र नभई सिंगो सुवर्णद्वार कै अपमान भएको सबैले महसूस गरेका छन् । जुन कि जसको आदेशले राखिएको भए पनि तुरून्त हटाई पुरानै यथास्थिति कायम गर्नु उचित देखिन्छ । यो स्वर्णद्वारभित्र पस्दा क्षेत्रपाल चोक (जसलाई जमोद्वार चोक पनि भनिन्छ) मा पुगिन्छ । यहाँबाट भित्र वेको चोक (बाङ्गो : पूर्व, उत्तर र पश्चिमसम्म लम्केको) बाट मूल चोकको सुन्दर कलात्मक तोरण सहितको द्वार र टुंडालहरू देखिन्छ । भित्र मूलचोक निकै भव्य देखिन्छ । ढुङ्गाको चारपाते ठूलो चोक, स्नेह मण्डप नामक डवली, दक्षिणतिर मनुष्य कदको गंगा जमुनाको मूर्तिसहित बीचमा सुवर्णद्वार, सुनकै छाना र ११ वटा गजुरहरू छन् । पश्चिमतिर कुमारी चोक पनि सुनको छाना ११ वटा गजुर र उत्तरतिर श्रीखण्ड झ्याल आदिको संयुक्त रूप तलेजु भवानी र मानेश्वरीको आगम् मन्दिर हो । यसका अतिरिक्त दुमाजु चोक, पीठ, पोखरी, नासल चोक, लक्ष्मी विलास चोक, तुं चोक, लुंहिती चोक, भैरव चोक, जिस्वां चोक, जहूँ चोक, महादेव चोक, भण्डारखाल पोखरी आदि स्थान यहाँका दर्शनीय क्षेत्रको रूपमा रहेको छ ।

## २. दरबार क्षेत्र

तलेजु मन्दिरको बाहिरतिर धेरै दरवारहरू भएको अध्ययन क्रमबाट देखिन्छ । विश्व प्रसिद्ध सम्पदा सूचीमा परे पनि जीर्ण भइसकेको र राजनीतिक कारणले वन्न नसकेको ५५ झ्याले दरवार, थंथु दरबार, बसन्तपुर दरवार, चौकोट दरबार, सिंह ध्वाखा दरवार, युथुनियम दरबार आदि पहिले रहेको देखिन्छ । तर आजभोलि धेरै दरबारहरू समाप्त भईसके र बाँकी रहेको पनि अर्कै रूपमा परिणत भइसकेको छ । ५५ झ्याल दरबार

अगाडि "च्यासींमण्डप" जुनकि वि.सं. १९९० सालको भूकम्पले खत्तम भएको थियो । जसलाई जर्मन सहयोगले २०४६ सालमा बनाइयो ।

### ३. चार धाम मन्दिर

भारतको विभिन्न स्थानमा पुग्न नपर्ने गरी जनताको धर्मप्रतिको आस्थाको कदर गरी मल्ल कालमा दरबार क्षेत्रभित्रै चार धामको मन्दिर बनेको देखिन्छ । खौमा ढोका नजिकै रहेको जगन्नाथ मन्दिर, यसको अगाडि चार वटा शिला स्तम्भ माथि गुम्बजले छोपिएको रामेश्वर मन्दिर जसलाई इतिहासकार भन्न रूचाउनेहरूले केदार मन्दिर पनि भन्ने गरेको पाइन्छ । यसको दायाँपट्टि कुनामा बद्रीनाथ, यसको अगाडि दुई तल्ले पगोडा शैलीको कृष्ण मन्दिर (द्वारिकानाथ) र बालमन्दिर नजिक रहेको Terracota Art को नमूनाको रूपमा रहेको केदार मन्दिर गरी ५ वटा मन्दिर चार धामको रूपमा दर्शनीय रूपमा प्रतिस्थापित भएको बुझिन्छ ।

### ४. यक्षेश्वर र मुक्ति मण्डप

भक्तपुरको पशुपतिनाथको रूपमा चिरपरिचित दुई तल्ले पगोडा शैलीको मन्दिर यक्षेश्वर महादेवको मन्दिर हो । जुन यक्ष मल्लले स्थापना गरेको मानिन्छ । यो मन्दिरको पहिलो तल्लामा रहेको २४ वटा टुंडालहरू "काम-कला" को दृष्टिले उत्कृष्ट मानिन्छ । यो मन्दिरको दक्षिणतिर दुई तल्ले तीन वटा सुनको गजुर भएको सत्तल "मुक्ति मण्डप" हो । अहिले यो ध्वस्त भइसकेको छ । पहिले यक्षेश्वरको नित्य पूजा तयार गर्ने ठाउँको रूपमा राजोपाध्याय ब्राम्हणहरूले चलन चल्ती गरी आएको ठाउँमा वि.सं. १९९२ सालमा अदालत स्थापना भएको र पछि "नारी विकास पुस्तकालय" बस्दा स्थानीय प्रशासनले भवनको हक निस्सा उक्त पुस्तकालय संचालन समितिलाई प्रदान गरेको कुरा यहाँनिर प्रासंगिक हुन आउँछ । यो भवनबाट पूर्वतिर उत्तर दक्षिण लामो पूर्व मोहडाको एक नाले पाटी "बच्छला फल्चा" हो, जसमा बच्छला देवीको भजन पहिले चलेको कुरा बुढापाकाहरू बताउँछन् ।

### ५. दथु बहा

यक्षेश्वर मन्दिरको पूर्वपट्टि भित्र दुई वटा चोक भएको क्षेत्र "दथु बहा" हो । "दथु बहा" भन्दा प्राय: कसैलाई थाहा हुँदैन । तर आजभोलि यहाँ चोकभित्र भक्तपुरमा धेरैलाई थाहा भइसकेको Students' Library को स्थापना र निरन्तरताले यो चोकको परिचय नै लाइब्रेरी चोक जस्तै हुन गएको छ । यो चोकमा पहिले मल्ल, दैवज्ञ, राजोपाध्याय थरकाहरू मात्र बस्दथे । अहिले त्यसमा ताम्राकार र बैद्य थर पनि थपिन पुगेको छ । यो दथु बहा राजा भूपतिन्द्र मल्लले पाँच तल्ले मन्दिर बनाएको र आफैले रेखदेख गरी आफै बस्न बनाएको पनि मानिन्छ । जसले गर्दा यहाँ राजकुल ढुङ्गेधारा, तलेजुका लागि चोखो पानी लिन हुने इनार, नासद्य, हनुमान द्य आदिले संयुक्त गरी हात्ती, घोडा बस्ने ठाउँसम्म पनि बनाई

कलात्मक भवन नै बनाएको देखिन्छ । कलात्मक ढोका पहिलो, दोस्रो र तेस्रो तल्लामा अति सुन्दर एवम् कलात्मक पासुका झ्या सात मुखे, पाँच मुखे र तीन मुखे गरी कलाको एक अनुपम नमूना नै तयार पारेको थियो भन्ने बुझिन्छ । तर आधुनिकताको नाममा यी कलाकृति झिक्दै नयाँ ढलान घरहरू बन्दैछन् ।

### ६. येता चपरी

हाल भूमि प्रशासन कार्यालय, घरेलु शिल्पकला बिक्री भण्डार रहेको लामो पाटी र गुठी संस्थान-भक्तपुर शाखा, सन्तति प्रा.वि. र स्मारक कार्यालय रहेको अर्को लामो सबैलाई येता चपरी भनिन्छ भन्ने कुरा अध्ययन, अनुसन्धान एवम् बुढापाकाहरूबाट जान्न सकिन्छ ।

भक्तपुर महोत्सवको बेला नगरपालिकाले उठाएका पसलहरूको बीच भागमा पूर्वेश्वर महादेवको लिङ्ग भएको ठूलठूला थामहरू भएको कलात्मक लामो पाटी "थाथु येता चपरी" हो । राष्ट्रिय कला संग्रहालयको अगाडि रहेको लामो पाटी "कुथु येता चपरी" हो, जसको बीचमा मल्लकालमा दरवार पस्ने ढोका भएको बुझिन्छ । जुन ढोका लाय्कू ढोकावाट आई दरबारमा पस्न बनाइएको थियो भन्ने बुझिन्छ । आजभोलि यसको बीचमा तत्कालीन भारतीय प्रधानमन्त्री जवाहरलाल नेहरूलाई भक्तपुरमा स्वागत गर्न बनाइएको मण्डपको पृष्ठभाग नेहरू स्मारकको रूपमा भक्तपुरलाई नै खिस्सी गरिरहेको जस्तो देखिन्छ, जसलाई छोप्न २०३० सालतिर त्यसको पनि अगाडि सानो तीन कवलको पाटी एउटा वनाइयो, जुन कि प्राचीनता छोप्ने औजार जस्तो मात्र देखिएको छ ।

ख्वप लाय्कूको सेरोफेरोमा फसीदेग (फर्सी जस्तो मन्दिर), चतुर्वर्ण विहार, तीन बत्सला मन्दिर, इपाछेंको लाय्कू - ढोका क्षेत्र, बिजुक्छे आगम् परिसर, बहाताको सापाछें आदि महत्त्वपूर्ण ऐतिहासिक, धार्मिक एवम् सामाजिक दृष्टिले उत्कृष्ट कलात्मक एवम् दर्शनीय स्थानहरू, मन्दिरहरू धेरै छन् । जसको अलग अलग परिचय गर्न प्रशस्त सामग्रीहरू पनि भेटिन्छन् । त्यसकारण भक्तपुर दरवार स्क्वायरले भक्तपुरकै सूक्ष्म रूपमा भए पनि प्रतिनिधित्व गर्न सक्ने देखिएकोले यसको बारे अध्ययन, अनुसन्धान, जीर्णोद्धार र पुनर्निर्माण आदि गरी पुर्खाले सुम्पिएको कला संस्कृतिलाई जगेर्ना गर्नु आजको आवश्यकता भइसकेको छ ।

*

# भक्तपुर तलेजुको मूलचोक

समग्रमा पूर्णता प्राप्त "ख्वप लाय्कू" को नामले प्रसिद्ध भक्तपुर राजदरबार, राजा, राजपरिवारको वासस्थान मात्र भन्दा अपूर्ण हुन जान्छ । बैदिक, तान्त्रिक मतका हिन्दू, बौद्ध देवी देवता, तलेजु भवानी एवम् राजगुरू, राजपुरोहित, राजोपाध्याय ब्राम्हणहरूका साथै उच्च पदस्थ भारदारहरूको यथायोग्य समीकरणयुक्त उपस्थिति नै भक्तपुर राजदरबारको पूर्णता मानिएको छ । राजाले आ-आफ्नो बासस्थान राजदरबारमा तलेजु भवानीलाई बिराजमान गराउँदा त्यसको शास्त्रीय पूजा पद्धति र मान्यताको परम्परागत अनुशासनमा पूर्णता प्राप्त एकातिर भयो भने अर्कोतिर तलेजुको पवित्र सामिप्यताले राजा, दरबार र जनताको सुरक्षा, सु-शासन एवम् सम्पन्नताको श्री बृद्धि हुन गएको कुरा धार्मिक एवम् सांस्कृतिक इतिहास अध्ययनबाट पुष्टि हुन्छ । अतः यस्तो समन्वयले सम्पूर्णता प्राप्त भक्तपुर राजदरबार लिच्छविकालको अन्त्यतिर नेपाल देशकै (नेपाल मण्डलकै) राजधानीको रूपमा वि.सं. १२०४ मा राजा आनन्ददेवले प्रतिस्था गर्दा देश र जनताको सम्मान र आत्म गौरवको इतिहास नै बन्न गयो ।[१] भक्तपुर समग्र नेपालको राजधानी बन्दा यहाँका शासकहरू "त्रिपुर" र "युथुनियम" नामक राजदरबारबाट शासन व्यवस्था चलाउँदथे । "भक्तपुर राजदरबारबारे राम्रो अध्ययन अनुसन्धान गरी ग्रन्थ प्रकाशन गर्ने तर्खरमा लाग्नु भएका डा. पुरुषोत्तम लोचन श्रेष्ठले भक्तपुरका दरवारहरू विशेषतः "त्रिपुर" र "युथुनियम" को अवस्थिति र पहिलो प्रामाणिक व्याख्या गर्नु भएको छ । जसलाई केही इतिहासकारहरूले नगरपालिका, पुरातत्त्व विभागलाई गाली गर्दै र यथार्थ र इतिहास खोजी गरी पत्ता लगाएका कुरा चोरेर सार्दै स्रोतसम्म नखुलाई उल्टो यो क्षेत्रमा "कसैले कलम चलाएन, सबै अन्धकारमा छन् । नयाँ इतिहासकार भनाउन रूचाउनेहरूले केही गरेन" भनि आफ्नो वैचारिक गरिबीलाई सबैको सामु उदाङ्गो पारेको पनि देखियो । यसकारण भक्तपुरमा राजदरबारहरूबारे मात्र हैन थुप्रै विषयमा यथार्थ कुराहरू जनताले थाहा पाउने छन् । त्रिपुर र युथुनियम पछि ख्वप लाय्कू क्षेत्रमा बसन्तपुर दरवार, चौकोट दरबार, सिंहध्वाखा दरबार, थँथु दरवार एवम् ५५ झ्याले दरबारहरू विभिन्न समयमा बन्दै गए । जसले प्रत्यक्ष अप्रत्यक्षरूपले तलेजु भवानीलाई मान सम्मान दिँदै सुरक्षा प्रदान गर्दै गए । जसबाट तलेजु र दरबारबीच एक अर्काका परिपूरकको जस्तै सम्वन्ध देखा पर्‍यो ।

---

१. श्रेष्ठ, डा. पुरुषोत्तम लोचन - 'ख्वप लायकुको विकासक्रम', "भक्तपुर", अङ्क १२४, २०५४, पृष्ठ २०

तलेजु भवानी राजा हरिसिंह देवले सिमरौनगढ ध्वस्त भईसकेपछि भक्तपुर ल्याइ सर्वप्रथम स्थापना गरेको मान्यता छ । भक्तपुर राजदरबारभित्र यो भवानीलाई मल्ल शासकहरूका स्वेष्ट देवताको रूपमा मूलचोक नामक चोकमा आगम् मन्दिर शैलीको वास्तुकलामा आधारित तान्त्रिक मन्दिरमा स्थापना गरी नित्य नैमित्तिक पूजा, जात्रा, पर्व आदि गुठी, भजन किर्त्तन चलाइ व्यवस्थित गरिराखे । तलेजु भवानी भक्तपुर पछि कान्तिपुर, ललितपुर शहरदेखि बनेपा, पनौति, नाला, आदि गाउँ- टोलसम्म मात्र हैन नेपाल अधिराज्य बाहिर चीनको तिब्बतसम्म पनि स्थापना भएको पाइन्छ ।[२] प्राय: सवै ठाउँका तलेजु परिसरमा मूलचोक भएको पाइन्छ । त्यसकारण मूलचोक तलेजुको एक अभिन्न अङ्ग मान्न सकिन्छ ।

नामैले मूलचोक भएकाले यसले मूल थलोको रूपमा मान्यता प्राप्त गरेको छ । उपत्यकाका तीनवटै शहरमा मूलचोकको विशेष मान्यता पनि छ । धार्मिक, साँस्कृतिक, प्रशासनिक एवम् राजनीतिक दृष्टिले पनि मूलचोक मूलथलो हो र महत्त्वपूर्ण कार्यहरू पनि यही चोकमा सम्पन्न गर्ने परम्परा रहेको पाइन्छ । राजाको राज्यभिषेक, प्रधानमन्त्रीदेखि अन्य भारदारहरूको नियुक्तिको काम र धार्मिक विधि-विधान यही चोकबाट हुने गर्दथ्यो ।

हाल भक्तपुर तलेजु भवानीको मूलचोक भक्तपुर राजदरबार क्षेत्र (Durbar Square) मा पर्दछ । यहाँ प्रवेश गर्न विश्व प्रसिद्ध स्वर्णद्वार (Golden Gate) वाट प्रवेश गरी जमोद्वार चोक, बेको चोक हुदै जाँदा पुगिन्छ । मूलचोकको मूल प्रवेशद्वार पूर्वाभिमुख छ । जसमा काष्ठकलाको अनुपम कलाकृति युक्तद्वार, स्तम्भ र तोरण छन् । यहाँबाट भित्र पस्दा मूलचोकमा पुगिन्छ ।

मूलचोक एक रोपनी क्षेत्रफलमा फैलिएको चोक हो । जसको चारैतिर एक मिटर अग्लो पेटी लगाइएको छ । पूर्व, पश्चिम र उत्तरतिरको पेटीको वीच भागमा तीन सिंढीको चोकमा ओर्लने भऱ्याङ्ग छ । चारैतिर पेटीको छेउमा १०८ वटा "चाकमता" नामक ढलोटका देवाहरू "दीपमाला" को रूपमा छन् । मूलचोकको चारैतिर विभिन्न नामका देवगृह (मन्दिर शैलीमा) छन् । चारै दिशा घेरी बीचमा परेको मूलचोक सुरक्षाको रूपमा गढ जस्तै मान्नुपर्छ । पूर्वपट्टि द्वारवाट पस्दा तीन कवलको खुल्ला दलान छ । दायाँ वायाँ भजन गर्ने पाटी "पाच्ला" एक मिटर अग्लो भएकोमा हाल दायाँपट्टिको एउटा पाटीमात्र बाँकी छ । यो दलानको वायाँ भण्डारकोठा, भैरव चोक जाने द्वार र दायाँतिर सलाँ कोठा (घोडा राख्ने कोठा), आचाजु कोठा छन् । द्वार कलश भित्तामा टाँसिएको दशवटा नेत्र छत्र सहितको सानो द्वार गवाक्ष पनि १० वटै छन् । पहिलो तल्लामा वंकुली, विश्वख्वाल कोठा, १० वटा टुंडाल, २ वटा आँखीझ्याल ५ वटा पासुका झ्याल र भित्तामा चित्रकलाहरू

२. इपाछें, लास्कुढोकाका रत्नराज राजोपाध्यायज्यूबाट प्राप्त जानकारी । उहाँले २०३५ सालमा तिव्वतको तलेजु भवानीलाई स्थानान्तरण कार्य गर्नुभएको थियो ।

छन् । दक्षिण लङमा चोका भारी कोठा, दुगु छ्यूयली, खँ छेँ च्च कोठा र भारी कोठासहित ५ वटा द्वार, कलश १० वटा छन् । बीचमा आकर्षक तोरणसहित पाताको मोलम्बा स्वर्णद्वार तोरणसहित छन् । दायाँ बायाँ गंगा-जमुनाको मनुष्यकदको स्वर्ण मूर्ति, अष्टमंगलयुक्त हेम गवाक्ष २ वटा र २ वटा स्वर्ण पत्र छन् जुन स्वर्णपत्र सुमति जयजितामित्र मल्लले राखेकोमा भक्तपुरलाई राजधानी भनिएको उल्लेख छ । माथिल्लो तल्लामा तलेजुको मूलकोठा, मानेश्वरी आदि रहेका छन् । १२ वटा टुँडालहरूमा ६ वटा मोलम्बायुक्त र ६ वटा काष्ठकलायुक्त छन् । मोलम्वायुक्त पासुका झ्याल तीनमुखे १ र काष्ठ पासुका झ्याल ३ वटा छन् । पश्चिममा पनि कुमारी चोक जाने दायाँ बायाँ देवतासहितको तोरणद्वार भण्डार कोठा, नकिंचा कोठा, दुमाजु जाने द्वार छन् भने उत्तरमा मु नकिं कोठा, ७ कवलको दलान, दायाँबायाँ भजन गर्ने पाच्ला २ वटा, ढुङ्गाको घोडा र हात्तीको मूर्ति भित्तामा टाँसिएका छन् । जसको रहस्य आपसी द्वन्द्व र मतभेद अन्त्य हुने शान्तिको प्रतीकको रूप हुन् । यो दलानमाथि ७ वटा आगम् झ्याल छन् । जसको बीचमा श्रीखण्ड झ्याल छन् । यो झ्यालवाट दृश्यावलोकन गर्दा तलेजु मन्दिर र मूल चोक सार्है मनमोहक देखिन्छ । यो कोठाको गार्होमा सुन्दर चित्रकला र श्लोकहरू लेखिएका छन् । जसमा मल्ल शासकहरूको वंशावली उल्लेख भएको देखिन्छ तर अहिले यो सबै धुँवाले अस्पष्ट भै बिलुप्त प्राय: भईसकेका छन् । जसबाट इतिहासको एक स्वर्णिम पृष्ठ बिलुप्त भएको भान हुन्छ । मूलचोकको दक्षिण र पश्चिममा सुनको छानामा ११ वटा छत्र सहितको गजुर छन्, जुन निकै भव्य र आकर्षक देखिन्छ । मूलचोकको नैऋत्य कोणमा स्नेह मण्डप नामक एक डबली छन्, जसमा बिस्केटमा "घासापा" भनिने जोगी चक्रपूजा गरिदिनु पर्ने परम्परा छ । ईशानकोणमा ठूलो घण्टा छ, जुन भूपतिन्द्र मल्लले राखेका थिए । यसको अगाडितिर सुनको तुलादान गर्दाको शिला स्तम्भ २ वटा आदिबाट मूलचोकको वैभव प्रस्तुत भएको स्पष्ट हुन्छ । मल्ल एवम् शाह शासकहरूका गरी १२ वटा अभिलेखहरू पनि यहाँ चोकमा देख्न सकिन्छ, जसवाट नेपालको इतिहासका विविध्र पक्षमा प्रकाश पार्न सक्ने अवस्था छ ।

बडा दशैंको प्राय: मूल कार्य, बिस्केट जात्राको गतिविधि, दमनारोहण, पवित्रारोहण, चर्न्हे पूजा, थापूजा आदि सबै काम यही मूलचोक हुँदै गर्ने गरिन्छ । तलेजुका मूल आचार्य ब्राम्हण, पूजारी नाईके जोशी, कमाचार्य एवम् अन्य विभिन्न जातका रकमीहरू यहाँका कर्मचारीहरू पनि यो मूलचोकमा नआइ कुनै काम गर्न जान नसक्ने कुरा पनि यहाँनिर महत्त्वपूर्ण हुन आउँछ । तलेजुको मूलद्वार स्वर्णद्वारमा दायाँ बायाँ अष्ठमंगलयुक्त साँस्कृतिक कलशसहित विभिन्न देवी-देवता, तोरण, गजुर र देवी तलेजु भवानी नै विराजमान छन् तर यस्तो द्वारको दायाँ बायाँ ती जीवदान प्राप्त कलशको अगाडि आजभोलि तामाको दुईवटा घडा राख्ने चलन सुरु गरिएको छ । त्यो चलन जुनसुकै तहका व्यक्तिको वा कार्यालयको आदेशमा राखेको भएपनि तत्कालै हटाउनु आवश्यक छ किनभने यसले परम्परा र

संस्कृतिलाई विकृत रूप दिनुका साथै मूलचोकको मूल मर्मलाई आघात पुगेको छ । मूलचोक प्रवेशद्वार र स्वर्णद्वारमा सुरक्षाको लागि शाही नेपाली सैनिकहरूले पहरा दिने सरकारी बन्दोबस्त साह्रै सह्रानीय छ । मूलचोक प्रवेशद्वारमा  फोटो खिच्न नहुने र छालाको कुनै चीज भित्र लग्न नहुने नियम छ । त्यो पनि साह्रै राम्रो कुरा हो । तर त्यहाँ रहेका सैनिकहरूले त्यो नियम पालना गरेका छैनन् । छालाको जुत्ता, वुट लाएर मूलचोकको बीचबाट पार गरी कुमारी चोकमा सुत्ने गर्छन् । सबैको लागि बनाइ लेखिएको नियम त्यही पालो बस्नेले नमान्दा विडम्वना भएन त ? के ती सैनिकहरू नेपाली जनता हैनन् त ? जसबाट नेपालीहरूमा मात्र होइन विदेशीहरूमा पनि नराम्रो प्रभाव पारेका छन् । स्वर्णद्वारको बायाँपट्टिको स्वर्णपत्रमा “लकाम कासाल दुता यने मदु” लेखिएको नियमको यो ठाडै उल्लंघन होइन त ? सम्बन्धित निकाय, व्यक्तिहरू, तलेजुका रकमीहरू र तलेजुको अख्तियारी पाएका मूल पुरोहितज्यूले राम्ररी विचार गर्नुपर्ने बेला भएको छ । किनभने वर्तमानको यो गल्ती भविष्यमा इतिहास बन्दा विसंगतिको जन्म हुन्छ । मल्लकालको अन्त्य गर्न शाहकालका सैनिकहरूले वि.सं. १८२६ मा मूलचोकमा छानाबाट चारैतिर बन्दुकले हान्दा गोली लागेको थाम, निदालका प्वालहरूवाट आज पनि युद्ध विभिषीकाको रूपमा धर्म संस्कृतिको विनाश लीलाको सुरुवात भएको सम्झना गराइरहेको छ ।

*

# भक्तपुर शहरका प्राचीनद्वारहरू

प्राचीन नगर भक्तपुर नेपालकै राजधानीको रूपमा पूर्व मल्लकालसम्म कायम रहेको पाइन्छ । राजधानी शहरको रूपमा परिणत गर्न विभिन्न पूर्वाधारहरू तयार भएको प्रमाण पनि पाइन्छ । यसै सन्दर्भमा प्रस्तुत लेखको एक महत्त्वपूर्ण आधार एवम् आवश्यकता महसूस भएकोले त्यसवारे केही चर्चा गर्ने जमर्को यहाँनिर गरिन्छ ।

भक्तपुर नगरलाई राजधानी शहर बनाउन अरू पूर्वाधारभन्दा सुरक्षाको विषय पनि कम महत्त्वको छैन । तसर्थ राजा यक्ष मल्लको शासनकालमा भक्तपुर शहरलाई चारैतिर सुरक्षा प्रदान गर्न पर्खाल बनाइ धेरै द्वारहरू सहितले किल्लाबन्दी गरी खावा एवम् सैनिक र हात हतियार राख्ने वुर्जासमेत वनाउन लगाएका थिए । ने.सं. ५७३ मा यी पर्खाल र ढोका (द्वार) हरू वनाएको कुरा भक्तपुर सुवर्णद्वारको पश्चिमाभिमुख शिलाभिलेखमा उल्लेख गरिएको छ । जुन यसप्रकार छ - "सम्वत् ५७३ श्रावण शुक्ल पूर्णमास्यां श्रवण नक्षत्र आयुस्मान योगे शुक्रवास श्री श्री जय यक्ष मल्ल देव प्रभु ठाकुरस्यं प्राकार आदिन गढ आरंभ थाङा दिवस शुभ । यसबाट राजा यक्षमल्लले (ने.सं. ५४९-६०२) भक्तपुर शहरलाई पर्खालले घेर्न लगाई द्वारलाई स्थापना गरेको कुरा प्रमाणित गर्दछ । तत्कालीन अवस्थामा यी पर्खाल र द्वारहरू जति आवश्यक एवम् सामरिक दृष्टिले महत्त्वपूर्ण पनि थिए । अरू राजनीतिक, आर्थिक एवम् अन्य क्षेत्रमा जतिसुकै विकास स्थिरता एवम् वैभवता भए पनि सुरक्षा विना यिनीहरूको कुनै प्रयोजन नहुने कुरा निर्विवाद सिद्ध छ ।

कालान्तरमा विभिन्न कारणले यी पर्खाल, द्वारहरू नष्ट भए, लोप भए तापनि यसको संरक्षण र सुरक्षा आज पनि त्यतिकै महत्त्वपूर्ण छ । जति देशको कलाकौशल एवम् ऐतिहासिक स्मारकहरूको उचित संरक्षण र संवर्द्धन आवश्यक छ । विश्व सम्पदा सूचीमा सम्म पनि समावेश भइसकेको भक्तपुर नगरका यी द्वारहरू कहाँ, कति र कुन अवस्थामा छन्, त्यसवारे स्थलगत निरीक्षण एवम् अन्य जानकारीको आधारमा प्रस्तुत छन् ।

१. **मूल ढोका (मूल ध्वाखा)** – यो ढोका बेखाल टोलबाट कमल विनायक जाने बाटोमा 'स्वंग पुखू' नजिकै पर्छ । जसको चिन्ह स्वरूप "लुखा खलु" भनिने ढुङ्गा मात्र वाँकी छ । यो ढोका पूर्वी भेगवाट शहर पस्ने मूल ढोका मानिन्छ ।

२. **लामागा ढोका** – हालको सरस्वती विद्यागृह भवन लामागा टोलबाट कमल विनायक जाने बाटोमा ढुङ्गेधारा नजिक पर्छ । हाल यसको कुनै अस्तित्व छैन ।

३. **ब्रम्हायणी ढोका (ध्वाखासि टोल)** – सूर्यमढी टोलवाट च्याम्हासिंह जाने बाटोमा छ । यसको "लुखा खलु" र "त्यफु ल्वहँ" पनि बाँकी छ तर भ.न.पा.ले यो स्थानभन्दा २ मिटर पूर्व वस्ती वाहिर पर्ने गरी एक भव्य ढोका बनाइसकेको छ ।

४. **माहेश्वरी ढोका** – सूर्यमढी टोलबाट माहेश्वरीघाट ओर्लने उकालोको सुरुमै पाटी नजिक यो रहेको छ । जसको "लुखा खलु" बाँकी नै छ ।

५. **माच्व ढोका** – ज्यलाँ टोलबाट माहेश्वरीघाट जाने बाटोमा "माच्व भैरव मन्दिर पाटी नजिकै छ । हाल यसको अत्तोपत्तो छैन ।

६. **वाचुत्वा ढोका** – यो ढोका इनाचो वाचुत्वाबाट माहेश्वरी जाने उकालोमा ढुङ्गे धाराको अगाडि पर्छ । यसको अहिले कुनै अस्तित्व छैन ।

७. **हनुमन्ते ढोका** – भक्तपुर हनुमान घाटबाट जगाती जाने पुल वारिपट्टि नजिकै पर्छ । हाल यसको पनि कुनै अस्तित्व छैन ।

८. **याता ढोका (याता ध्वाखा)** – गोल्मढी याता टोलबाट हनुमानघाट जाने बाटोमा ढुङ्गेधारा र मुसलमानी मस्जिदको बीचमा पर्छ । हाल यसको अस्तित्वको रूपमा त्यस ढोकाको शिला स्तम्भ एउटा द्वार रहेको स्थलमा रहेको छ । जसलाई आधार मानी यो ढोका बाहिरलाई देश बाहिर मान्ने प्राचीन मान्यता अनुरूप "राजोपाध्याय" ब्राम्हणहरूले आजसम्म पनि उपनयन, समावर्तन संस्कार पश्चात् देशान्तर गमन गराउन यो ढोकाबाट बाहिर जानु पर्ने चलन अद्यावधि कायमै छ ।

९. **भौ ढोका (भौ ध्वाखा)** – चण्डी भगवती मन्दिर र यसको अघिल्तिरको पूर्वाभिमुख ढुङ्गेधाराको बीचमा पर्छ । हाल यसको कुनै अस्तित्व छैन ।

१०. **योसिंख्य ढोका** – योसिंखेलको ख्यपुखुको पश्चिम "भैलगा" नाम सानो कुण्ड (खाडल) नजिक यसको केही अस्तित्व रहेको पाइन्छ ।

११. **माक्चो ढोका** – थुगचो टोलबाट मंगल तीर्थ निस्कने बाटोमा पुरानो मल्लकालीन स्वरूपकै भव्य ढोका अद्यावधि कायमै छ । वास्तुकला, सुरक्षा र भव्यताको दृष्टिले यो ढोकाबारे गहन अध्ययन गर्नुपर्ने आवश्यक देखिन्छ ।

१२. **युगचो ढोका** – मंगलाछेबाट मंगलतीर्थ जाने बाटो उकालोको बीचम एक पाटी र जलद्रोणी (जहुंको) अगाडि रहेको यो ढोका अहिले अस्तित्वमा छैन ।

१३. **बाजिगांचा ढोका** – भागांचो र इचादोबाट मंगल तीर्थ जाने पुरानो बाटोको बीचमा यो रहेको छ । जसको "लुखा खलु" हालसम्म कायमै छ ।

१४. **भार्वाचो ढोका** – भार्वाचो टोलबाट हालको कुथुबही मिनीबस पार्क जाने उकालोमा रहेको यो ढोका भव्यताको नमूनाको रूपमा दायाँ बायाँ २ वटा ढुङ्गाको भव्य सिंह प्रतिमासहित वज्रले छाएको अद्यावधि कायमै छ । यसलाई नगरबाट बाहिर जाने मूल ढोकाको रूपमा अहिले पनि व्यवहारमा प्रयोग भईरहेको बुझिएको छ ।

१५. **इटाछें ढोका** – इटाछें टोलबाट मिनीबस पार्क जाने वाटोमा नःपुखु (गुह्यपोखरी) को नजिक केही भग्नावशेषको रूपमा यो रहेको छ तर भ.न.पा.ले मिनीबस पार्कमै यो ढोकालाई स्थानान्तरण गरी बनाएको छ ।

१६. **इन्द्रायणी ढोका** – खौमा टोलबाट इन्द्रायणी पीठ जाने उकालो वीचमा "लुखा खलु" मात्र कायम रहेकोमा हाल यो बनिसकेको छ ।

१७. **तिनिग ढोका** – ब्यासी टोलबाट भ्fौखेल जाने चौबाटो छेउ पर्छ तर यसको कुनै अस्तित्व छैन ।

१८. **महाकाली ढोका** – भोलाछेंबाट महाकाली पींठ जाने चौबाटो छेउ ढुङ्गेधारा नजिक पर्छ। तर यसको कुनै अस्तित्व छैन । ढोकामा "श्री महाकाली जय" लेखिएको छ भनि बुढापाकाहरू बताउँछन् ।

१९. **महालक्ष्मी ढोका** – महालक्ष्मी पीठवाट कमल विनायक जाने बाटोमा अवस्थित छ । हाल यसको कुनै अस्तित्व छैन ।

यी ढोकाहरू बनाउँदा भक्तपुरका ब्राम्हण, क्षेत्री, बैश्य र शूद्र चारवटै वर्गले सहयोग श्रमदान गरेको उल्लेख पनि यक्ष मल्लको शिलालेखमै उल्लेख गरिएको छ । यो पर्खाल र ढोकाबारे D. Wright ले History of Nepal PP. 188-89 मा र सूर्य विक्रम ज्ञवालीको "नेपालीको मध्यकालीन इतिहास" मा पनि उल्लेख गरेको पाइन्छ ।

नगरको सुरक्षाका लागि बनाइएका द्वारहरूका अतिरिक्त नगरभित्र पनि केही द्वारहरू रहेका छन्, जुन यसप्रकार छन् -

१. **सुवर्णद्वार**- यो विश्व प्रसिद्ध Golden Gate हो । भक्तपुर दरबार चोकमा वास्तुकलाको जीवन्त नमूना बोकी "तलेजु भवानी" को मन्दिरभित्र जाने मूलद्वारको रूपमा रहेको छ ।

२. **लास्कु ढोका** – भ.न.पा. वडा नं. १३ स्थित राजोपाध्यायहरूको आगम् घरको उत्तर बाटोमा यो ढोकाको केही चिन्हहरू बाँकी रहेका छन् । यो ढोका "लासकुस" ढोका अर्थात् स्वागतद्वारको अपभ्रंश मात्र हो । दशैंमा तलेजु भवानी र यसको घोडालाई स्वागत गर्ने ढोका पनि यही हो ।

३. **खौमा ढोका** – खौमा टोलबाट दरबार चोक पस्ने मूल ढोकाकै रूपमा अद्यावधि कायम रहेको यो ढोकामा खापा नभएको तर सैनिक पहरा दिन बस्ने ठाउँ रहेको बुझिएको छ । हाल.यो स्थान पनि छैन ।

४. **सुकुलढोका** – सुकुलढोका थाहा नहुने भक्तपुरवासीहरू शायदै होलान् तर यसको कुनै अस्तित्व आजभोलि छैन । सुकुलढोका टोलको भीमसेन स्थानको सार्वजनिक सत्तल घरको अगाडि लालाछें टोल जाने बाटोमा यो ढोका रहेको बुझिएको छ, जसलाई सुकुलले मात्र छाएर बनाएको भन्ने प्रचलन पनि छ ।

ढोका कुनै पनि घर, मन्दिर आदिका सुरुवात हुन् । यो विना अरू सबै निरर्थक छन् । त्यसकारण यी ढोकाहरू जति सुरक्षाको प्रतीकको रूपमा रहेको छ, त्यतिकै सुन्दरता, कलाकौशलको प्राचुर्यता र वास्तुकलाको मौलिकता प्रदर्शन गरी भक्तपुरकै इज्जतको रूपमा रहेको मान्नुपर्छ ।

*

# भक्तपुर दर्शन : धार्मिक र सांस्कृतिक रूपमा

नेपालको विशेषता नै यसको प्राचीन तथा ऐतिहासिक सम्पदाको आकर्षण हो । यही ऐतिहासिक एवम् प्राचीन कला संस्कृति, सम्पदा र परम्पराहरू प्रतिको आकर्षण नै विदेशीहरू नेपाल भ्रमण गर्न ओइरिरहनुका कारण हुन् । कुनै पनि विदेशी पर्यटकहरू यहाँ अत्याधुनिक सुख सुविधा भोग्न, हेर्न आउँदैनन् । त्यसकारण नेपालको पर्यटन उद्योग र व्यवसायको मूल तत्त्व कलाकृतिको अनुपम रमणीय विविधता र ऐतिहासिक तथा प्राचीन सम्पदा मात्रै हुन् । यिनीहरूको उचित एवम् न्याय संगत रूपमा संरक्षण, सम्वर्द्धन विना नेपालमा पर्यटन विकास असंभव प्राय: छ ।

यही परिप्रेक्ष्यमा भक्तपुर एक महत्त्वपूर्ण नगर (शहर) मान्न सकिन्छ । भक्तपुर प्राचीन सम्पदाले परिपूर्ण बस्ती शहर हो । जसले आधुनिकतारूपी तेज बहाव सामु पनि घुँडा नटेकी आफ्नो अस्तित्व गुमाएको छैन भन्न सकिन्छ । विश्व मानचित्रमा कैयन यस्ता राष्ट्रहरू छन्, जसको कला-संस्कृति, साहित्य-संगीत तथा धार्मिक-सांस्कृतिक मौलिकताको धरातलको कारण संसारभरि प्रसिद्धि पाएका छन् । यस्तै कारणहरूले परिपूर्ण भक्तपुरले पनि संयुक्त राष्ट्र संघीय शैक्षिक वैज्ञानिक संगठन (UNESCO) द्वारा विश्व सम्पदा सूचीमा समावेश हुन पाएको यहाँनिर उल्लेखनीय मात्र नभई प्रसंशनीय पनि मान्नुपर्दछ । त्यसमध्ये पनि भक्तपुर दरबार चोक (Durbar Square of Bhaktapur) र न्यातपोल (पाँचतल्ले) मन्दिरलाई उत्कृष्ट मानिएको महत्त्वपूर्ण छ । यहाँको प्राचीन सम्पदा र वास्तुकलाको बेजोड नमूना भक्तपुरको अन्तर्राष्ट्रिय क्षेत्रमा पहिचानको सर्वोत्कृष्ट पक्ष मान्नुपर्छ ।

भक्तपुर एक बस्ती, गाउँ, शहर, नगर र जिल्ला मात्र नभई नेपालकै एक महत्त्वपूर्ण स्थान भएको कुरा निर्विवाद छ । जसलाई सरकारी संचार माध्यम र पत्रपत्रिकाको प्रचार माध्यम आदिले नेपालको सानो जिल्ला, कान्छो नगर भनि होच्याई खोच्याई गरे तापनि आफ्नो मौलिक स्वरूप, ऐतिहासिक, सामाजिक, धार्मिक एवम् भू-बनोटको दृष्टिले विशिष्ट ऐतिहासिक प्राचीन महत्ताका लागि विशाल तथा अद्बितीय मानिन्छ । विश्व सम्पदाको स्रोतमध्ये नेपालको हिमालय (Mt. Everest) लाई मानिएको छ । त्यस्तै भक्तपुर पनि नेपालको ऐतिहासिक विकासक्रम र सभ्यताको मूल स्रोतको रूपमा मानिन्छ । यस परिप्रेक्ष्यमा डा. पुरुषोत्तम लोचन श्रेष्ठज्यूको भनाई "वि.सं. १२०४ मा राजा आनन्ददेवको पालामा आइपुग्दा समग्र नेपाल अधिराज्यकै राजधानीको रूपमा व्यवस्थित बन्न पुग्यो । यसपछि भक्तपुर राजनीतिक प्रशासनिक दृष्टिले मात्र नभएर धार्मिक, सांस्कृतिक दृष्टिले पनि मूल थलोको रूपमा देखा परेको थियो ।" (सांस्कृतिक मूल थलो - भक्तपुर, ख्वपृङ्ग-वर्ष ५, २०५३, पृ. ३९) निकै प्रासंगिक हुन पुगेको देखिन्छ ।

भक्तपुरलाई सांस्कृतिक एवम् अन्य भाषाको माध्यमले धेरै नामाकरण भएको पाइन्छ । ती मध्ये ख्वपृङ्ग, खृपुङ, भक्तग्राम, भादगाउँ र ख्वप आदि प्रमुख छन् । नेवारी भाषामा आज पनि ख्वप भन्ने व्यापक रूपमा प्रचलित छन् । विश्व सम्पदा सूचीमा आफ्नो सबल उपस्थिति जनाउन सफल भक्तपुर शहरलाई आजभोलि पनि बुढापाकाहरू भादगाउँ भन्ने गर्छन् र भन्न रूचाउँछन् पनि । प्राचीनताले मात्र नभई यसको प्राकृतिक छटा र अनुपम सुन्दरता त्यसमा समावेश हुनुले पनि देश विदेशका पर्यटकहरूलाई यसले आकर्षित गरेको वास्तविकता हाम्रो सामु छर्लङ्ग छ । अत: भक्तपुरलाई प्राचीनता, ऐतिहासिकता एवम् प्राकृतिक सौन्दर्यको अनुपम संगम स्थल भन्नुमा अत्युक्ति नहोला ।

संस्कृत एवम् नेवारी भाषाका विभिन्न शब्दले भक्तपुरलाई व्यवहृत गरिए तापनि यसको अर्थान्वेषणमा प्राय: समानता पाइन्छ । 'भक्त' को अर्थ धर्म परायण, धार्मिक मूल्य र मान्यतालाई मौलिक एवम् नैतिक मार्गदर्शन युक्त पहिचानको रूपमा स्थापित गर्न रूचाउने जनताहरूको समूह हो । 'पुर' को अर्थ बासस्थान बस्ती आदि हो । अर्को अर्थमा हाम्रो दैनिक खाना 'भात' धेरै खान पाइने स्थान अर्थात् अन्न रूपी धनधान्यले परिपूर्ण नगर भन्ने पनि बुझिन्छ । 'भक्त' को अर्को सोझो अर्थ 'भात' हो, जसको आधारमा अन्न उत्पादनको क्षेत्रमा तत्कालीन समयमा भक्तपुर आत्मनिर्भर थियो भन्ने स्पष्ट हुन आउँछ । यही अवस्थाको परिणाम हो, भक्तपुर वास्तुकला, चित्रकला, धार्मिक एवम् सांस्कृतिक विकासमा सम्पन्न हुनु । २०४६ सालको जन आन्दोलन पश्चात् आजसम्ममा जम्मा २०० थानभन्दा बढी देवी देवताहरूको मूर्तिहरू चोरीभई अलपिएका छन्, विदेशिएका छन्, अझ भनौं बेचिएका छन् । सुरक्षा र संरक्षण नपाई अधोगतिमा पुगी विदेश पुग्न थालेका हाम्रा सांस्कृतिक, ऐतिहासिक सम्पदाहरूको उचित व्यवस्थापन हुन नसकेमा हाम्रो इज्जत, गौरव एवम् मौलिक परम्पराको इतिश्री हुन धेरै समय लाग्दैन । यही धारणा अनुरूप ती सम्पदाहरू, धार्मिक, सांस्कृतिक धरोहरको संरक्षण गर्नु पर्ने हामी सबै भक्तपुरका जनताहरूको प्रमुख दायित्व अन्तर्गत हुन गएको कारणले तत्सम्बन्धी विषय जानकारी हुन अनिवार्य देखिन्छ । भएका ऐतिहासिक तथा सांस्कृतिक सम्पदाहरू र देवी देवता, मठ-मन्दिर, पाटी ढुङ्गेधारा, डवली, पोखरी आदिको बारे जानकारी दिनु प्रासंगिक हुन आउँछ ।

भक्तपुरको परिचय गर्नु सजिलो काम होइन । विद्वानहरूले यसलाई परिचय गर्दा यसरी पनि लेखेको पाइयो - Bhaktapur, a place of historical importance and the home of medieval art and architecture, is one of the three capital towns of Nepal. तीन शहर काठमाडौं उपत्यका भित्रको पुरानो अवधारणा हुन् । मल्लकालमा तीन शहर तीन वटै स्वतन्त्र राज्यको रूपमा रहनु मात्र यसको कारण होइन । तीन शहर स्वतन्त्र रूपमा रहनु अघि भक्तपुर स्वतन्त्र नेपाल अधिराज्यको राजधानीको रूपमा विकास भएको पाइन्छ । प्राचीन अभिलेखहरूको अध्ययनबाट 'खृपुङग्राम' र 'माखोपृम्सतल द्रङ्ग' को

रूपमा प्रचलित एवम् व्यवहृत भक्तपुरलाई आनन्ददेवको पालामा (ने.सं. २६७-२८६) नेपालको राजधानीको रूपमा प्रतिस्था गरेको पुष्टि हुन्छ । हिन्दू परम्परा र वास्तु शिल्पकला शास्त्रअनुसार 'शंख' को आकारमा स्थापना गरेको भक्तपुर शहर तन्त्रशास्त्रअनुसार यन्त्राकार भएको कुरा पनि अध्ययन क्रमले पुष्टि गर्छ । यन्त्रोद्वारअनुसार विन्दु, त्रिकोण, अष्टकोण र भूपुर आदि हुनु पर्ने अवधारणाअनुसार वीचमा केन्द्र बिन्दुको त्रिपुरसुन्दरी (तीन प्रकारले सुन्दरी तीन वटा स्थानमा स्थापित भन्ने अर्थमा) त्यसपछि अष्ट गणेश, अष्ट सिद्धि, दश महाविद्या अनि अष्टभैरव, अष्टमातृका, त्रिकुण्ड गणेश एवम् चतुर्दिग् शिव आदिले सुसज्जित गरी निर्माण भएको देखिन्छ । भौगोलिक अवस्थितिअनुसार शंख जसरी बीचमा फुलेर छेउमा भिरालो पर्ने हो, त्यस्तै भक्तपुर शहर पनि चारैतिरबाट हेर्दा अग्लो स्थानको रूपमा रहेको आज पनि हामी देख्न सक्छौं । नगर सुरक्षार्थ देवी देवताहरूको घेराबन्दी र भौगोलिक स्वरूप दुवैको संगमले ब्रम्हाण्डलाई प्रतिबिम्बित गरेको मानिन्छ । यही ब्रम्हाण्डलाई प्रतिविम्बित गरेको शहरको विशेषता नै मुख्य विशेषताको रूपमा रहनु भक्तपुरको विशेष अर्थ गौरव, भौगोलिक गौरव र तान्त्रिक गौरव हुन गएको छ । भक्तपुर इपाछें टोल निवासी पं. रत्नराज राजोपाध्यायज्यूसित सुरक्षित 'भक्तपुरको नक्शा' नामक तान्त्रिक नक्शा वि.सं. २०३६-३७ तिर तत्कालीन भक्तपुर चित्र संग्रहालयले फोटोकपी गरी उतारी कार्यालय र कर्मचारीहरूको घरघरमा मात्र पुऱ्याएनन्, तत्कालीन जर्मन प्रोजेक्टका जर्मनहरूलाई पनि उपलब्ध गराइयो । यो राम्रो कुरा हो, कि यति महत्त्वपूर्ण नक्शाको प्रचार जर्मनीसम्म पुग्यो तर त्यो नक्शा कसको भन्ने उल्लेख गर्नुपर्ने सामान्य नैतिक दायित्वसम्म पनि पूरा नगरी आफ्नो सम्पत्ति जस्तै प्रयोग गरेको घटना दुखद् नै मान्नुपर्छ । यही प्रामाणिक तान्त्रिक नक्शाअनुसार महत्त्वपूर्ण देवी देवता बीचमा रही अरू सुरक्षा गणहरू वाहिरी घेरामा रहँदै गए जस्तै भौगोलिक रूपमा शंखको आकारअनुसार पनि मिल्ने तादात्म्यता रहेको पाइन्छ । शहरको वीच भागमा तलेजु भवानी, सिद्धिलक्ष्मी र त्रिपुरसुन्दरी रहे जस्तै शहर व्यवस्थित गर्न राजा, राजगुरू, पुरोहित राजोपाध्याय (ब्राम्हण) वर्ग र अन्य भारदारहरू, जातिहरू विन्दु र त्रिकोणभित्र बास गर्ने व्यवस्था मिलाइयो । यही क्रमले त्रिकोण बाहिर केही भिरालो परेको ठाउँ र तहतह परेको ठाउँमा सामाजिक एवम् थर, जाति प्रथा प्रणालीअनुसार राजा, राजगुरू एवम् भारदारहरू पछिका जातिहरू बसाउँदै लगेको पाइन्छ । शहरको छेउ किनार सीमाना, पवित्र खोला नाला र तीर्थस्थल पुग्दा देवी देवता पनि साह्रै बलिया र जातपातमा तल्लो वर्ग भएपनि बलिया र जुनसुकै काम गर्न पनि तयार हुने जनताहरू बसोबास गराइएको कुरा ज्यादै महत्त्वपूर्ण र अर्थ गौरवभित्र पर्छ ।

भक्तपुर दर्शनको नालीवेली ज्यादै गहन तथा ग्रन्थ निर्माण गर्न पुग्ने रूपमा विस्तृत छ । तसर्थ कुनै पनि स्वदेशी एवम् विदेशी पर्यटकहरूका दर्शनीय र महत्त्वपूर्ण कला संस्कृति एवम् धार्मिक ऐतिहासिक स्थानहरूका बारेमा संक्षेपमा जानकारी प्रस्तुत गरिन्छ ।

१. **ख्वप लायक्** (Durbar Square of Bhaktapur)

यो भक्तपुरको मुख्य ठाउँ एवम् राजधानी बस्तीको रूपमा रहेको छ जहाँ धेरै देवी देवता, मन्दिर, मण्डप, डबली, ढुंगेधारा, पाटी तथा राज दरबार, अरू दरबारहरू, चोकहरू एवम् वास्तुकलाको भण्डार नै छन् ।

(क) **चारधाम मन्दिर** : खौमा ढोकाबाट दरबार चोक जाने बाटोको छेउमा ५ वटा मन्दिरहरू छन् :

(अ) **जगन्नाथ मन्दिर** : भारतको जगन्नाथ मूर्ति जस्तै देखिने काठको मूढामा मनुष्याकृतिको आभाष मात्र दिने गरी रङ्ग प्रयोग गरी अङ्ग पहिचान हुने तुल्याई वलभद्र, सुभद्रा र कृष्णका तीनवटा मूर्ति रहेको मन्दिर तीन तल्ले पेटी माथि अवस्थित छ ।

(आ) **रामेश्वर मन्दिर** : जगन्नाथ मन्दिरको पूर्व तर्फ ढुङ्गाको ४ वटा थाम माथि बज्र निर्मित गुम्वज् हालिएको छ । यस शिवलिङ्गलाई केदार मन्दिर भनि भ्रामक प्रचार गर्नेहरू पनि पाइएका छन् ।

(इ) **बद्री नारायण मन्दिर** : जगन्नाथ मन्दिरको दक्षिणतिर १ तल्ले मन्दिरमा बद्रीनारायणको मूर्ति स्थापित छ । दायाँ बायाँ ढुङ्गाका २ सिंह र २ वटा कलात्मक थाम (स्तम्भ) युक्त मन्दिरमा जलप्रवाहका लागि सानो 'हिटीमंग' राखिएको छ ।

(ई) **कृष्ण मन्दिर** : भक्तपुर बालमन्दिर अगाडि २ तल्ले पेगोडा शैलीको कृष्ण मन्दिरलाई गोपीनाथ ४ किल्लागुठी अन्तर्गत भ.पु. २१ गुठीमध्ये एकको रूपमा दर्ता गरिएको छ । यस मन्दिरमा महाविष्णु ध्यानको गोपीनाथको १ र गोपिनी दायाँ वायाँ २ गरी जम्मा ३ वटा मूर्ति, मन्दिर अगाडि २ तह पेटीमा ४ सिंह, मन्दिरको अगाडि खम्बा माथि हात एउटा खण्डित गरुडको मूर्ति र गजुरको पूर्वतिर कृष्ण यन्त्र आदि रहेको छ ।

(उ) **केदारेश्वर** : कृष्ण मन्दिरको अगाडि आग्नेय कोणमा इँटाले मात्र बनेको Terrocota Arts को वेजोड नमूनाको रूपमा केदारेश्वर शिवलिंग स्थापित यो मन्दिर हो । यसको ४ दिशामा सानो ४ वटा मन्दिर र बीचमा ठूलो अग्लो १ गरी ५ वटा मन्दिरको समूहगत रूपमा ५ वटा गजुर युक्त छन् र उत्तराभिमुख जल प्रवाहका लागि 'हिटीमंग' पनि रहेको छ ।

**(ख) बसन्तपुर दरवारको मुल ढोका :**

हाल श्री पद्म हाइस्कुलभित्र जाने ढोका नै प्राचीन मल्लकालीन बसन्तपुर दरबारको मुख्य प्रवेशद्वार हो भन्ने कुरा पुराना चित्रहरूबाट प्रमाणित हुन्छ । त्यसको दायाँ बायाँ उग्र चण्डादेवी र उग्रभैरवको कलात्मक मूर्तिले तात्कालीन कलाकारिताको परिचय दिन्छ । भूपतिन्द्र मल्लले ने.सं. ८२० मा स्थापना गरेको अभिलेख सो मूर्तिको पादपीठमा उल्लेख गरिएको छ ।

**(ग) सिंह ढोका :**

आजभोलि राष्ट्रिय कला संग्रहालय पस्ने ढोकालाई पहिले सिंह ढोका (Lion Gate) भन्ने प्रचलन थियो । नामैले सिंह ढोका हुँदा २ वटा सिंहका मूर्ति दायाँ बायाँ राखी बीचमा हनुमन्त भैरव र नरसिंह भैरवको सुन्दर मूर्ति निकै आकर्षक छ र यो मूर्तिको माथि खम्बा २ वटा साना आठ हाते मूर्ति पनि ज्यादै राम्रो र कलात्मक छ । जसको नाम ऋषभदेव र शलभदेव हुन् र ने.सं. ८१८ मा भूपतिन्द्र मल्लले स्थापना गरेको अभिलेख र ध्यान मूर्तिको पादपीठमा अङ्कित छन् । यो ढोकाभित्र जाँदा राष्ट्रिय कला संग्रहालय पुगिन्छ जहाँ मूर्तिकला, चित्रकला आदिको दुर्लभ संग्रह गरिएका छन् ।

**(घ) तलेजु मन्दिर :**

सिम्रौनगढबाट ल्याइएको विश्वास गरिने तलेजु भवानीको मन्दिर यहाँ भित्रका चोकहरू, मूर्तिकला, काष्ठकला र विश्व प्रसिद्ध स्वर्णद्वार (Golden Gate) ले भक्तपुरको मात्र होइन एशिया महादेशको आधा कलाकारिताको प्रतिनिधित्व गर्दछ । London का विद्वान इतिहासकार Percy Brown का अनुसार Golden Gate र यसको छेउछाउका कला अवलोकन नगर्नेले एशिया महादेशकै भ्रमण गरेपनि यो अधुरो रहन्छ । त्यसकारण सिङ्गो स्वर्णद्वार एउटाले नै भक्तपुरको कलाकौशलको परिचय बोकेको पाइन्छ । तलेजु भवानी र उसका गण देवी देवता, आयुध, वाहन, त्रिशूल छत्र सहित अष्टमंगल युक्त कलश, गजुर र ध्वजा पताका एवम् जल जन्तु आदिले सहित महिषमर्दिनी भगवती, तलेजु भवानी र उसका आम्नाय, विशेषता र ध्यानयुक्त स्वर्णद्वारको दायाँ वायाँ २ वटा स्वर्णपत्रले यसको महत्त्व, विशेषता र इतिहासै प्रदर्शन गरिरहेको भान हुन्छ । राजा रणजीत मल्ल र पत्नी (रानी) जयलक्ष्मीद्वारा ने.सं. ८६४ मा स्थापित स्वर्णद्वार इतिहास, संस्कृति एवम् जात्रा पर्व, तन्त्रमन्त्र आदिको पनि मूल द्वारको रूपमा लिएको भन्न सकिन्छ ।

स्वर्णद्वारभित्र जाँदा 'बेको' चोक, मूलचोक, भैरवचोक, कुमारीचोक, स्नेहमण्डप, सुन्धारा र प्रशस्त काष्ठकला, पाषाणकला, मूर्तिकला एवम् वास्तुकलाको अनुपम

सङ्गमस्थल विभिन्न कालमा बनेको र जीर्णोद्धार भएको देखिन्छ । सरकारी नियम कानूनअनुसार 'No Picture' र 'Entrance for Hindus only' लेखिए तापनि यहाँ भित्रका सबै तस्वीर खिचिएको पाइएका छन् । जो पनि गएका छन् जसबाट सिद्धान्त र व्यवहार बीच ठूलो अन्तर देखिएको छ ।

**(ङ) ५५ झ्याले दरबार र भूपतिन्द्र मल्लको सालिक :**

भक्तपुरको प्रसिद्ध एवम् आकर्षणको रूपमा स्वर्णद्वारको बायाँपट्टि ५५ वटा कलात्मक झ्यालहरू भएको ३ तल्ले दरबार राजा भूपतिन्द्र मल्लले निर्माण गराएका थिए । यसमा भएका आँखीझ्याल, तोरण अनि स-साना असंख्य चित्रहरू, जुन पहिलो तल्लामुनि निस्केका दलिनहरू बीच छन्, ज्यादै महत्त्वपूर्ण मानिन्छन् । पहिलो तल्ला भित्रपट्टिको चित्रकला ज्यादै उत्कृष्ट छन् भने दोस्रो तल्लामा काष्ठकला प्रदर्शित गरिएका छन् ।

स्वर्णद्वारको अगाडि विशाल खम्बामाथि सुनको मोलम्वामा स्थापित भूपतिन्द्र मल्लको सालिक यहाँको अर्को आकर्षण हो । अग्लो ढुङ्गाको खम्बामा सर्पले चारैतिर बेरिएको, त्यस सर्पको टाउकोमा १ चरा बसेको, सर्पमाथि पद्माशन, त्यसमाथि ४ सिंह युक्त सिंहासनमा विराजमान भूपतिन्द्र मल्लको सालिकलाई धेरै आभूषण लगाई राखेको, ढाल, तरबार आदि हतियारहरूसहित चुडामणि युक्त छत्रले ओढाइएको नमस्कार मुद्रा साँचिकै जीवन्त कला मान्नुपर्छ ।

**(च) ठूलो घण्टा र १ जोडी दमाहा (नगरां) :**

५५ झ्याले दरबारको अगाडि कुनामा एकतल्ला माथि ठूलो घण्टा झुण्ड्याइएको छ, जुन रणजीत मल्ले स्थापना गरेको अभिलेख पनि त्यसैमा कुँदिएको छ । यसका साथै पहिले 'छें भडेल अड्डा' मा राखिएको र २०५४ कार्तिक ६ गतेदेखि १० गतेसम्म भएको भक्तपुर महोत्सवको बेला बजाइएको तामाको एक जोडी ठूलो दमाहा र ठूलो घण्टा बजाउनु पर्ने दैनिक प्रथा थियो । जुन तलेजु भवानीको नित्य पूजा पछि बजाइन्थ्यो तर दमाहा बजाउने प्रथा धेरै वर्षदेखि बन्द भएको छ । घण्टा बजाउनेलाई ९ दाम् (४ दाम्को १ पैसा) र दमाहा (नगरा) बजाउनेलाई ९ पाथी चामल भन्ने एक अनौठो प्रचलन रहेको कुरा यहाँनिर उल्लेखनीय हुन आउँछ ।

**(छ) ३ बत्सलाको मन्दिर :**

ठूलो घण्टाको सँगै शिखर शैलीको ढुङ्गाको मन्दिर, ५५ झ्यालको कुनामा रहेको दुर्लभ जीवजन्तुको मूर्ति सहितको शिखर शैलीको ढुङ्गाका मन्दिर र भक्तपुर नगर पालिका जाने बाटोमा पर्ने १ तल्ले छाना भएको रातो मन्दिरलाई ३ वत्सलाको मन्दिर भन्ने

चलन छ । जसमा पहिलो जगतप्रकाश मल्लले दोस्रो भूपतिन्द्र मल्लले र तेस्रो जयजितामित्र मल्लले निर्माण गराएका थिए । यी मन्दिरहरू यन्त्र बत्सला, कलश बत्सला र नृत्य बत्सलाको रूपमा त्रितत्त्व मानि 'नास: द्यो' को रूपमा पनि मानिएको कुरा प्रचलित छ ।

यसका अतिरिक्त पशुपतिको रूपमा यक्षेश्वर महादेव यक्ष मल्लले स्थापना गरेको मन्दिरमा पहिलो तल्लामा दुई प्रकारका एकादश रूद्रका मूर्ति, प्रख्यात कामकला आसन सहितको २४ टुँडालहरू र दोस्रो तल्लामा षोडश मातृकाको १६ वटा टुँडाल एवम् काष्ठकलाको कारणले प्रसिद्ध छ । अन्य दर्शनीय स्थानहरू मध्ये च्यासिलिं मण्डप, मण्डपको दक्षिणतिरको पञ्चमुखी शक्तिसहितको वीरभैरव रहेको ढुंगेधारा, सिलु महाद्यको प्रतीक स्वरूप फसीदेग, बटुक भैरवको रूपमा चोकम्हुरु द्य, जसलाई बौद्धमार्गीहरू 'तुकंभुलु' को रूपमा मान्छन्, दत्तात्रय मन्दिर, पूर्वेश्वर महादेव र साकोठामा मनकामना देवी, त्यसको अगाडि चतुर्वर्ण विहार (हाल चतुब्रम्ह महाविहार भनि नाम परिवर्तन गरिएको) आदि दरबार स्क्वायरका सांस्कृतिक, धार्मिक स्थान र कलाकृति हुन् ।

**२. टौमढी टोल :**

यहाँ विश्व प्रसिद्ध पाँचतल्ले मन्दिर, ३ तल्ले भैरवनाथ मन्दिर, तिलमाधव नारायण चोक र गाहिटी टोलको लक्ष्मी नृसिंहको मन्दिर दर्शनीय एवम् महत्त्वपूर्ण स्थान हुन् । ५ तल्ले मन्दिर 'नसें च्या या दथी नसें ताङाव' भन्ने पदावलीको अर्थ लगाउँदा ने.सं. ८२२ भन्ने हुन आउँछ । तर धेरै विद्धान एवम् इतिहासकारहरू यसलाई ८२८ भनि नबुझेर गल्ती गरिरहेको यहाँनिर उल्लेख गर्नु बाञ्छनीय हुन्छ । यो मन्दिरलाई भूपतिन्द्र मल्लको उत्कृष्ट कलाकारिता एवम् धार्मिक गहनताको द्योतक मान्नुपर्दछ । इतिहासमा यो टोललाई 'तलमण्डे' भनिएको र यसकै अपभ्रंश 'टौमढी' हुन गएको मानिन्छ ।

**३. दतात्रय चोक :**

यो चोक तचपाल टोलमा पर्दछ । यक्ष मल्लले आफ्नो विजय यात्रा गर्दा 'शिकार जोङ्ग' जिती सकेपछि दतात्रय मन्दिर स्थापना गरेको उल्लेख इतिहासमा पाइन्छ । मौलिक शैलीमा बनेको यो मन्दिर अगाडि जोडी पहलमान (कुथुवा) ले मन्दिरकै शोभा बढेको देखिन्छ ।

दतात्रय मन्दिर अगाडि भक्तपुर प्रसिद्ध भीमसेन मन्दिर छ, जसको अगाडि एउटा डबली पनि छ, जसलाई 'भीसिंद्यया दवु' भन्ने चलन छ । यो भीमसेनको कलेवर वि.सं. १९७१ मा इपाछेंका विद्धान ब्राम्हण अनन्तकुमार राजोपाध्यायले गर्दा मन्त्र शक्तिले माटोको मूर्तिलाई पूर्ण जीवन्यास गरी हिंडाइ प्रतिस्था गरेको उल्लेख जनजीवनमा अद्यावधि प्रचलित छ ।

दतात्रय मन्दिरको वायाँपट्टि भित्र एउटा चोक छ, जसलाई 'वाने लाय्कू' भन्ने चलन छ । यसको पूर्ण रूप 'बन्दै राजकुल' हो । यसको स्थापना 'वन्हिराज' नामक राजोपाध्याय (ब्राम्हण) ले संभवत लिच्छवीकालतिर गरेको अनुमान गरिन्छ । चोकको चारैतिर यो लाय्कूको घर भएको तर हाल सबै निजी प्राय: भइसकेको देखिन्छ । यो भक्तपुरको पहिलो तलेजु भन्ने पनि व्यापक रूपमा प्रचलित छ । यसका अतिरिक्त वाकुपति नारायण सूर्यमढी टोलमा, दतात्रय मन्दिरको चारैतिर पूजारी मठ, ताजा मठ, दथु मठ आदि काष्ठकलाको भण्डारकै रूपमा मठ र मन्दिरहरू, पाटी, ढुङ्गेधारा आदिले भक्तपुर शहरको माथिल्लो टोलहरूको महत्त्वलाई अक्षुण्ण राखेको देखिन्छ ।

यसका साथै भक्तपुर टुंडिखेल नजिकको १६ लक्षणले युक्त सिद्ध पोखरी र तुछिमला टोलमा अवस्थित अवालेहरूको आगमघर जहाँ ईटाको गाह्रो मात्र छैन, बरू आँखीझ्याल, तोरण, दलीनसमेत पनि ईटाकै अर्थात् माटो पोलेर ढालुवा तुल्याइएको Terracota Arts पनि भक्तपुरको थप आकर्षण मान्नुपर्दछ ।

संक्षेपमा भक्तपुरको प्रसिद्ध स्थानहरूको बारेमा जानकारीको अतिरिक्त बाटोमा, बाटोको दायाँ बायाँ र पेटीमा, पाटी पौवा, सतल, पोखरी, ढुङ्गेधारा, डबलीदेखि लिएर मठ मन्दिर, विहार, घाट आदि स्थानहरूमा पनि असंख्य ऐतिहासिक, सांस्कृतिक वैभवहरू छरिएर रहेका छन् । यसका अतिरिक्त देवगृह (द्योछें), भजनघर, धार्मिक सांस्कृतिक बाजागाजा, चाडपर्व, जात्रा आदिबाट पनि पर्यटकहरूलाई मात्र आकर्षित नगरी सिंगो भक्तपुरलाई जीवन्तता प्रदान गरिरहेको यथार्थ चित्र धार्मिक, सांस्कृतिक ज्ञान चक्षुले हेर्न सकिएमा निश्चय पनि यो ठाउँ पुण्यभूमि हो भन्नुमा अत्युक्ति नहोला ।

*

# टौमढी टोल - एक चिनारी

परम्परागत हिन्दू विचारधारा अनुसार शहरी योजना, शहर र गाउँ भन्नु मात्र घरहरूको समूह होइन । जसबाट त्यहाँका बासिन्दाहरूको शारीरिक, दार्शनिक एवम् अन्य विकासका कुराहरूको रक्षा हुन्छ । यही विचारधारानुसार शहरहरू र शहरोन्मुख बस्तीहरूले ब्रम्हाण्डलाई प्रतिबिम्बित गर्नुपर्दछ । त्यस्ता बस्तीहरू र शहर भन्नु देवी देवताहरूको बासस्थान हुन् । यसलाई खुला फाँटसित अलग्याउने, फरक देखाउने मुख्य लक्षण पनि यही हो । यस आधारमा कुन ठाउँ कुन देवी देवताबाट संरक्षित छ भन्ने देखाउन साँध सीमानाको नितान्त आवश्यक पर्दछ । यो साँध सीमाना भनेको प्राकृतिक वा धेरै वर्ष पहिलेदेखि मानिदै आएको हुनुपर्छ किनभने भिन्न भिन्न प्रकारका सँस्कृतिहरूमा यो कुराको प्रभाव परेको पाइन्छ ।

उपरोक्त परम्परागत हिन्दू विचारधारानुसार भक्तपुर शहर एक महत्त्वपूर्ण स्थान मानिन्छ । किनभने यो शहर प्राय: वर्तमानमा सम्म पुग्दा पनि पाश्चात्य विचारधाराको प्रभावबाट मुक्त छ । नेपाल अधिराज्यभित्र प्राचीन बस्तीहरूमध्ये एक मानिएको भक्तपुर शहर काठमाडौं उपत्यका अन्तर्गत प्राचीन व्यवस्थित शहरको रूपमा स्थापित भएको मानिन्छ । शिलालेखहरूको अध्ययनको आधारमा पहिले "द्रङ्ग" (जस्तै - माखोपृङ्ग सतल द्रङ्ग) र ग्राम (जस्तै- खृपुङ्ग्राम) आदि विभिन्न नामाकरण हुँदै वर्तमानमा भक्तपुर नामले प्रख्यात यो शहर आनन्ददेव (ने.सं. २६७-२८६) ले समस्त नेपालकै राजधानीको रूपमा प्रतिस्था गर्दा राम्रो विकास भएको बुझिन्छ । यही सन्दर्भमा भक्तपुर नगरलाई २४ टोलमा विभाजित गरी त्यसको सीमाना निर्धारण गरी विभिन्न देवी देवताहरूद्वारा संरक्षित गराए । तिनीहरूमा "टौमढी" टोल एक प्रमुख एवम् महत्त्वपूर्ण टोल मानिन्छ ।

टौमढी टोल भ.न.पा. वडा नं ११ अन्तर्गत पर्दछ । यो क्षेत्र शहरको बीच भागमा प्राय: परेको मानिन्छ । यो टोलको पुरानो नाम "तलमण्डे" रहेको कुरा "सं. ४५१ ज्येष्ठ शुद्धि १२ तलमण्डे यन्दा मण्डो ध्वजा छायाँ" (गोपाल राज वंशावली - पृष्ठ ५५.४७ क) बाट स्पष्ट हुन्छ । शहर व्यवस्थित गरी टोलहरूको विभाजन गर्दा शहर र टोलहरू रक्षा गर्न देवस्थल एवम् पीठहरूको स्थापना गर्नुपर्ने कुरा प्राचीन वस्तुशास्त्र (वास्तुकला शास्त्र) अनुसार "स्थान शुद्धिकरण" सिद्धान्तको सल्लाह तत्कालीन राजाहरूलाई राजगुरू पुरोहितहरू (राजोपाध्यायहरू) ले दिएको कुरा पनि अध्ययन क्रमले पुष्टि हुन्छ । त्यस्तै शहर रक्षार्थ सबभन्दा उत्तम मन्दिरहरू, देवस्थल अनि जात्रा, मेला शुरू गर्ने सल्लाह पनि दिएकै कारणबाट आज ती मन्दिरहरू एवम् जात्राहरूमा तत्कालीन धार्मिक परम्परा, मान्यता र समन्वयको प्रभाव परेको कुरा हामी पाउँछौं । त्यसकारण आज आएर ती जात्रा, मेला र मन्दिर, देवालयहरूले

अतीतका विभिन्न ऐतिहासिक कालहरूको प्रतिनिधित्व गरिरहेको कुरा जगजाहेर मान्नुपर्दछ ।

ठाउँहरूको छनौट अर्थात् प्रबन्धमा सामाजिक एवम् धार्मिक तथ्यहरूको प्रभाव परेको हुन्छ । त्यसको गहन अध्ययन विशेष महत्त्वको हुन्छ । यो कुरा वास्तुकला शास्त्रका मूल पुस्तकहरूमा मनगय पाइन्छ । यही परिप्रेक्ष्यमा भक्तपुरको सामरिक घेराबन्दी एवम् व्यवस्थित रक्षा प्रणाली मुताविक अष्टमातृका, अष्ट भैरव, अष्ट सिद्धि र दश महाविद्या आदिद्वारा परिवेष्ठित रहेको कुरा भक्तपुरको तान्त्रिक नक्सा (जुन नक्शा- रत्नराज राजोपाध्यायज्यू, भक्तपुरसँग सुरक्षित छ) बाट प्रमाणित हुन्छ । यो बाहिरी घेरापछि भित्री रक्षा पंक्तिमा अष्ट गणेश, त्रिकुण्ड गणेश अनि त्रिपुरसुन्दरी आदि विराजमान छन् । उदाहरणको रूपमा शहरको भित्री भागमा भक्तपुरमा ३ वटा गणेशहरूको एउटा समूह छ, जसलाई त्रिकुण्ड गणेश भनिन्छ । ती हुन्: वालाखु गणेश, चलाखु गणेश र मुलाखु गणेश । यी ३ वटालाई गणेशको उपासना परम्पराको विधिसित सम्वन्धित भिन्नै पीठको रूपमा लिन सकिन्छ । तिनीहरूको सोही आशय मुताबिक प्रयोग पनि भएको छ । बिहान धेरै मानिसहरूले ती तीनैवटाको पूजा गर्दैनन् । ती मध्ये एकको मात्र उद्देश्य अनुरूप पूजा गरिन्छ । त्रिकुण्ड गणेश नामैले यिनीहरू ३ वटाको बीचमा एक आपसमा सम्बन्धित छन् र तिनीहरू एउटै पद्धति अन्तर्गतका अङ्ग हुन् भन्ने मान्न सकिन्छ । यो अर्थमा ती पीठहरूका मात्र होइन सो त्रिकोण भित्रका ठाउँहरूको पनि आपसी सम्वन्ध छ र महत्त्व पनि । सामाजिक बनोट र यसको सिद्धान्तको जहाँसम्म सम्वन्ध छ, यसको गहन अन्वेषणबाट यी वास्तविक कुरा हुन् भन्ने पनि पुष्टि हुन्छ । परम्पराअनुसार भक्तपुर नगरका ब्राम्हणहरूको अर्थ शहर व्यवस्थित गरी प्रतिस्था गर्दाका राजगुरू पुरोहित र उनका नाताकुटुम्ब हुन् । ती ब्राम्हणहरू राजोपाध्याय थरका हुन् र वर्तमानमा पनि भक्तपुरमा राजोपाध्याय ब्राम्हणहरू यही त्रिकुण्डको त्रिकोणभित्रै प्रायः वसेका पाइन्छन् ।

माथि उल्लेखित कुरा अनुसार टौमढी टोल भक्तपुरको मुख्य थलो मान्नुपर्छ । किनभने टौमढी टोल इलाकाभित्र विश्व प्रसिद्ध पाँच तल्ले मन्दिर अवस्थित छ, जुन मन्दिरभित्र सिद्धिलक्ष्मी देवी र तिनका परिवार स्थापित छन् । जसलाई राजा भूपतिन्द्र मल्लले ने.सं. ८२२ मा स्थापना गरेका हुन् । यो मन्दिर धार्मिक, वास्तुकला र दार्शनिक दृष्टिले पनि ज्यादै महत्त्वको छ ।

यस्तै अर्को ३ तल्ले भैरव मन्दिर पनि निकै महत्त्वपूर्ण कलापूर्णताको रूपमा यो टोलमा रहेको छ । यो मन्दिरमा आकाश महा भैरव स्थापित छ । टौमढी टोल अन्तर्गत ५ तल्ले मन्दिरको नैऋत्यकोणमा "जोर गणेश" स्थापित छन् । यसको अगाडि दश महा विद्यामध्येको छिन्नमष्ता विद्याको रूपमा चण्डिका र भुवनेश्वरी विद्या पनि स्थापित छन् । नारायण चोक नामक चोकभित्र "तिल माधव नारायण" को मन्दिर र वरपर वाणेश्वर महादेव, धनवराह, कुमार र सूर्य नारायण आदि देवताहरू स्थापित छन् । नारायण चोकको पूर्वपट्टि बाटो मै खाल्डोमा "चलाखु गणेश" छन् र पश्चिमतिर "बन्दी विनायक" जगन्नाथ

मन्दिर, क्रोध भैरव, नृसिंह मन्दिर आदि पनि स्थापना भएका छन् । यो नृसिंह मन्दिरमा "लक्ष्मी नृसिंह" को शक्तिसहितको शान्तमूर्ति प्रतिस्थापित छन् । जसलाई राजा जयस्थिति मल्लले स्थापना गरेको मानिन्छ र प्राचीन हिन्दू परम्परा वस्तुशास्त्र अनुसार विष्णुका दश अवतारमध्येको नृसिंहको मूर्ति शहरभित्र स्थापना गर्ने चलन छैन अथवा भनौं शहरभित्र स्थापना गर्नु हुँदैन भन्ने सम्म पनि चलन छ । यस आधारमा त्यो बेलामा यो स्थान शहरको बाहिरी सीमाना भएको बुझिन्छ र देशभित्र नृसिंह स्थापना गर्नुहुँदैन भन्ने परम्पराको पालना गर्ने अन्तिम राजा जयस्थिति मल्ल हुन् भन्ने पनि प्रमाणित हुन्छ । यस अतिरिक्त लिंगायत मत्का जंगमवादी मठ, बिस्केटको बेला कापालिकहरू बस्ने, ऐसा नामक रोटी पकाउने र सामग्री तयार गर्न बनेको "ऐसा माह्री" नामक मण्डप (जसमा हाल "क्याफे न्यातापोल" रहेको छ) पनि टौमढी मै छन् । टौमढी चोकको बीचमा तह्लां दबु, चुकह्लां दबु, वेता दबु र "लुंहिटी" नामक सुन्धारा आदिवाट यो टोलकै महत्त्वमात्र हैन शोभा पनि बढेको मान्नुपर्दछ । "पु बाहा" नामक एक बहाल जुन कि भित्र चोक र चारैतिर कलात्मक घर र आगम घरहरूले सुसज्जित छन् पनि यो टोलको शोभा र महत्त्व हो । "पु बाहा" भनेको "पुरोहित बाहा" को अपभ्रंश हो र पहिले यो बाहा राजाले राजगुरू पुरोहितहरूका लागि बनाइ दिएको भन्ने कुरा हालसम्म प्रचलित यो नामबाटै प्रमाणित हुन्छ ।

यसका साथै प्रसिद्ध बिस्केट जात्राको शुरूवात टौमढी टोलबाटै भैरवनाथ र भद्रकालीको रथ तानिने हुन्छ । यही जात्राको समयमा कानफटा जोगीहरूले यही टोलमा "जोगी चक्र" पूजा गर्ने पनि चलन छ । भाद्र कृष्ण प्रतिपदाको दिन गाईजात्रा अन्तर्गत परालको भैरव देश परिक्रमा गराउने, पुलुकिसी घुमाउने, मसान भैरव घुमाउने, कृष्णाष्टमीको कृष्ण जात्रा आदि धेरै जात्रा पर्व गुठीको शुरूवात पनि यही टोलबाट प्रकारान्तर रूपमा चलेको पाइन्छ । यसप्रकार छोटकरीमा भन्नुपर्दा टौमढी टोलमा के कस्तो छ ? अथवा कहाँ कुन देवता स्थापित छन् भन्ने कुरावाटै यसको धार्मिक सांस्कृतिक महत्त्व छर्लङ्ग हुन्छ ।

| समूह | | नाम |
|---|---|---|
| १. त्रिकुण्ड गणेश मध्ये | - | चलाखु गणेश |
| २. चार नारायण मध्ये | - | तिल माधव नारायण |
| ३. अष्ट भैरव मध्ये | - | क्रोध भैरव (सभुंग भैलद्य) |
| ४. अष्ट गणेश मध्ये | - | बन्दि विनायक |
| ५. दश महाविद्या मध्ये | - | छिन्नमष्टा, भुवनेश्वरी |
| ६. दश अवतार मध्ये | - | नृसिंह (लक्ष्मी सहित) |

भक्तपुर २४ टोलमा विभाजित गरी सन्धि सीमाना छुट्याउँदा यो टौमढी पनि एक टोल हुन् भन्ने प्रमाण नवदुर्गाको तान्त्रिक नाच, पेगोडा शैलीको बेजोड नमूना ५ तल्ले मन्दिर, भैरव मन्दिर, तर्‍हाँ दबु र चुकर्‍हाँ दबुको बीचमा "ड्ा लाकेगु" परम्परावाट पनि अझ बढी प्रष्ट हुन्छ र भक्तपुर शहरको मध्य भागमा परेको टौमढी टोलबाट अरू टोलहरूकै नेतृत्व नै लिन खोजेको जस्तै छ भन्नु अत्युक्ति नहोला ।

*

# स्वर्णद्वारका दुई स्वर्णपत्रहरू

नेपाल इतिहास अध्ययनका स्रोतहरू मध्ये महत्त्वपूर्ण स्रोत पुराना अभिलेखहरू हुन् । जसबाट नेपालको इतिहासलाई विशुद्ध रूपमा प्रकाशित गर्न र प्रमाणित गर्न धेरै सहयोग हुन गएको कुरा आज सर्वमान्य भईसकेका छन् । यही कारणले गर्दा विदेशीहरूले मात्र लेखेका इतिहास पढ्न हामी नेपालीहरू बाध्य हुन परेको होइन बरू उनीहरूले लेखेका धेरै कुराहरू प्राचीन अभिलेखको आधारमा हामी संशोधन गर्न सक्षम भएका छौं । इतिहास अन्वेषक एवम् यसका विद्यार्थीहरूका लागि यो खुशी एवम् गौरवको विषय हुन गएको छ । यही सन्दर्भमा विश्व प्रसिद्ध भक्तपुरको स्वर्णद्वार (Golden Gate) को २ स्वर्णपत्रको परिचय संक्षिप्त रूपमा चर्चा गरिएको छ ।

संयुक्त राष्ट्र संघ शैक्षिक, वैज्ञानिक तथा साँस्कृतिक संगठन (युनेस्को) द्वारा विश्व सम्पदा सूचीमा भक्तपुर शहरलाई समावेश गरिएको कुरा भक्तपुर नगर, नेपाल राष्ट्रको लागि मात्र नभई विश्वका लागि पनि गौरव मान्नुपर्ने विषय मानिएको छ । भक्तपुर शहर नेपालको एकीकरण हुनु अघि उपत्यकाभित्र रहेका कान्तिपुर, ललितपुर, कीर्तिपुर, बनेपा, नाला, चाँगु, साँगा, साँखु जस्ता स्वशासित साना राज्यहरूको पुर्ख्यौली राज्य मानिएको छ । भक्तपुरको राजधानी शहर शंखको आकारमा राजा आनन्ददेवले बनाएको कुरा बंशावलीबाट ज्ञात हुन्छ । यस्तै भक्तपुर तलेजु भवानीको मन्दिर प्रवेश गर्न भक्तपुरका अन्तिम मल्ल राजा रणजीत मल्लले वास्तुकलाको अनुपम नमूनाको रूपमा स्वर्णद्वार स्थापना गरेका थिए । यसैलाई अन्तर्राष्ट्रिय मान्यता प्राप्त भयो । प्रसिद्ध ब्रिटिश इतिहासकार अलेक्जेण्डर पावेलले आफ्नो प्रसिद्ध पुस्तक "द लास्ट होम अफ मिस्ट्री" (रहस्यको अन्तिम थलो) मा भक्तपुर शहरको वर्णन गर्दै लेखेका छन् कि - "थाइलैण्डका सुनौला देवल, पेकिङका प्यागोडाहरू, बनारसका घाटहरूभन्दा पनि कलात्मकतामा श्रेष्ठ नमूनाको रूपमा भक्तपुरको स्वर्णद्वार उत्कृष्ट छ ।"

स्वर्णद्वार भक्तपुरमा ने.सं. ८७४ पौष वदि ६ षष्ठी तिथिको दिन कोटयाहुति यज्ञ ब्राम्हणद्वारा गराई स्थापना गरिएको कुरा द्वारको दायाँ बायाँको स्वर्णपत्रबाट पुष्टि हुन्छ । दुवै स्वर्णपत्र प्रचलित नेपाल लिपि (नेवा आख:) मा १८ धर्सौको नियममा बनाइएको छ । दायाँपट्टिको स्वर्णपत्रमा मल्ल राजाहरूको इष्टदेवता "मानेश्वरी" को प्रार्थना र संस्कृत भाषामा स्वर्णद्वार स्थापना गरेको कुरा र मिति लेखेको पाइन्छ । बायाँपट्टिको स्वर्णपत्रमा रणजीत मल्लको प्रशस्ती, पत्नीसहित भई भक्तपुरको राज्य गरेको, राज्यको ४ किल्ला, द्वारको

सुरक्षाको जिम्मेदारी, कोट्याहुतिको मितिसहित् मन्दिरभित्र निषेधित कुराको चर्चा नेपाल भाषा (नेवारी भाषा) मा गरिएको छ ।

जसबाट हामी के कुरा थाहा पाउँछौं भने तत्कालीन नियम अनुसार राजालाई २ वटा श्री प्रयोग गरिन्थ्यो । 'श्री श्री रणजीत मल्ल' लेखिनु यसको प्रमाण हो । सर्वसाधारण जनतालाई १ श्री, राजालाई २ श्री र देवी देवतालाई 'श्री ३ स्वेष्ट देवता' भनेर ३ श्री लेख्ने परम्परा मल्लकालदेखि प्रचलित भएको थियो । यो स्वर्णपत्रमा महारानीका नाम नलेखि पत्नी शब्द प्रयोग गरी 'जय लक्ष्मी' लेखिएको यही मात्र एक अभिलेख हो । राज्य विस्तारको प्रमाण स्वरूप "नालदूम पूर्व, दूधकोशी पश्चिम, दोलखासहित राज्य याङाव" लेख्नुको अर्थ नालदुमबाट पूर्व, दूधकोशीबाट पश्चिम दोलखासहित भक्तपुर अधिनस्थ भन्ने बुझिन्छ । 'थ्व पालध्वाकास सुवर्ण द्वार, तोरण (पोलल), गजुल छायाव दूता' लेख्नुबाट यो स्थानमा द्वार पहिलेदेखि नै थियो । तर स्वर्णद्वार मात्र पछि राखिएको हो, जसमा तोरण, छाना, गजुर आदि समावेश गरी चढाऐं भन्ने अर्थ हामीले बुझ्नुपर्छ । 'देश जोशी नेम्ह, तालचामोल दकोसेनं थ्व सुवर्णद्वारादि विचाल यायमाल, यातसा पुण्य मयातसा पाप' भन्ने वाक्यले यो द्वारको सुरक्षाको जिम्मेदारी २ जना तलेजु ज्योतिष र 'तालचामोल' थर भएकाहरू (हाल ताचाभारी) ले गर्नुपर्ने लेखिएको ज्यादै महत्त्वपूर्ण मानिन्छ । किनकि आज विश्व सम्पदा कै सुरक्षा गर्न कठिनाइ भएको अवस्थामा त्यो जमानामा धर्मको आधारमा जिम्मेवारी दिएको कुरा आज पनि त्यतिकै अनुकरणीय मान्नुपर्छ । जिम्मेवारी पूरा गरे पुण्य नगरे पाप भन्नुबाट धर्म प्राण जनतालाई धर्मको बाटो नछोड्नु, छोडेमा दण्डका भागी बन्नु पर्ने चेतावनी पनि मान्नुपर्छ । 'लकाम, कासाल दुतायने मदु' भनि जुत्ता र छालाको बस्तु (जिउ कस्ने) भित्र लग्न पाइँदैन भन्ने प्रतिबन्धात्मक वाक्यांश लेख्नुबाट त्यसबेलाको तलेजु प्रवेशको नियम कति व्यवस्थित थियो भन्ने कुरा छर्लङ्ग हुन्छ ।

यो स्वर्ण पत्रबाट स्वर्णद्वार भक्तपुरका प्रख्यात राजा भूपतिन्द्र मल्लले बनाए भनि केही इतिहासकाहरूको कथन, गाइड बुकको लेखाइ र पथप्रदर्शकहरूको भनाइलाई गलत साबित गराउँछ । स्मारक ऐनको १३ नं. दफाले तलेजु जस्तो ठाउँभित्र सरकारी अनुमति बिना फोटो खिच्न नपाइने कुरालाई पनि काटेको पाइन्छ । तसर्थ विश्व सम्पदा सूचीमा दर्ता भइसकेको यो स्वर्णद्वारको स्वर्णपत्रले तमाम पाठकवर्गमा भक्तपुर तलेजु र त्यहाँको व्यवस्थाको राम्रो जानकारी हुन जाने आशा गर्न सकिन्छ ।

*

# बाराही पीठको धार्मिक महत्त्व

हिन्दू देश नेपालमा कुनै पनि स्थान, गाउँ, नगर, शहर वा जिल्ला, बस्ती देवी देवता र मन्दिरबिना अपूर्ण मानिन्छ । त्यसकारण नेपाल मन्दिरै मन्दिरको देश कहलिएको छ । त्यस्तै भक्तपुर पनि धार्मिक, सांस्कृतिक सम्पदाको प्रचुरताले यसलाई पनि मन्दिरै मन्दिरको नगर, शहर (Temple Town) भन्दा कुनै फरक नपर्ला । ईशाको बाह्रौं शताब्दीदेखि भक्तपुरको राजनीतिक महत्त्व यक्ष मल्लको समयसम्म नेपालको (नेपाल मण्डल) राजधानीको रूपमै रहनु ज्यादै महत्त्वको कुरा मात्र नभई धार्मिक सांस्कृतिक दृष्टिले त्यो भन्दा महत्त्वपूर्ण मानिएको छ । किनभने राजनीतिक रूपले राजधानीको रूपमा स्थापित हुन चाहिने पूर्वाधारहरू सामरिक सुरक्षाका साथै धार्मिक सुरक्षाको व्यवस्था पनि ज्यादै राम्रो भएको पाइन्छ । यो नगरलाई सुरक्षा गर्न चारैतिर पर्खाल, नगर द्वार, गढ, खावा आदि बनाई मजबूत किल्लाकै रूपमा बनाएको र यसको निर्माणमा प्रमुख ४ जात ब्राम्हण, क्षेत्री, बैश्य, शूद्रको सहभागिता भएको कुरा ने.सं. ५७० को यक्ष मल्लको शिलालेखबाट जान्न सकिन्छ । यस्तै आनन्ददेवको पालामा चारैतिर अष्टमातृका पीठ नगरको बाह्य भागमा थुम्कोमाथि जङ्गलको बीचमा र नगर बेस्थित खोला नालाको किनारमा स्थापना गरी दैविक शक्तिको सुरक्षा घेरा कायम गरी विभिन्न तहमा पंक्तिबद्ध गरी अष्टभैरव, अष्टसिद्धि, दश महाविद्या, अष्टगणेश, त्रिकुण्ड गणेश, सिद्धिलक्ष्मी, त्रिपुरसुन्दरी एवम् तलेजु भवानी मानेश्वरी आदि तान्त्रिक शक्तिबाट पनि नगरलाई सुसज्जित गराइयो । यसरी शक्तिशाली, व्यवस्थित एवम् सुन्दर नगरीको नामाकरण पनि त्यस्तै ढङ्गमा भएको देखिन्छ । 'भक्तपुर' नामाकरण, भक्त (धार्मिक आस्था हुने जनता) र पुर (बस्ती, ग्राम, प्रदेश) को रूपमा भएको देखिन्छ । भक्तको अर्थ आस्थावान् जनताको अलावा भात पनि हो भन्ने कुरा संस्कृत भाषाका कोशहरूबाट थाहा पाउन सकिन्छ । मानदेवकालीन् समयमा खोपृङ, पछि खृपुङ, माखो पृङ, सतलद्रङ, भद्रग्राम आदि शब्दहरूबाट अहिले भक्तपुर र नेवारीमा ख्वप शब्द भक्तपुरलाई व्यवहृत गरिएको छ ।

यस्तो भक्तपुरलाई 'उपत्यकाको कान्छो नगर तर कला संस्कृतिको क्षेत्रमा बृद्धपन बोकेको' भनेर सरकारी सञ्चार माध्यमले हेयदृष्टि, वक्रदृष्टिले हेरेपनि यसलाई विश्व सम्पदा संघले 'विश्व सम्पदा सूची' मा समावेश गरेर सरकारी रवैयाको पर्दाफास गरेको महसूस हुन्छ । यसभन्दा पनि बढी जनताले आफ्नो नगरलाई उचित सम्हार र माया गर्दा आज भक्तपुर नगर अरू कुनै नगरभन्दा कम छैन । यही गरिमा अन्तर्गत बाराही पीठ पनि एक पवित्र एवम् भव्य पीठ हो । मध्यकालीन नेपाली कला कौशललाई भरसक नबिगारी संरक्षण गरिएका नगर पीठ, मन्दिरहरूमध्ये बाराही पीठ सर्वश्रेष्ठ मान्नुपर्छ । बाराही देवीलाई

नेवारीमा 'याकति अजिमा' भन्ने चलन छ । यसलाई भव्यता र गरिमामयी बनाउन याकति अजिमाको क्षेत्र नै प्रशस्त छ । यसको क्षेत्र इटाछें टोल, तेखाचो, थुगचो, इचादो आदिदेखि तिनिख्य, सल्लाघारी, निकोसेरासम्म मानी यसलाई न्हय्स: त्वा[1] भनिएकोबाट स्पष्ट हुन्छ । न्हय्स:त्वा भित्रका डकमी, सिकमी, लोहँकमी, लुंकमी, नकमी, चाकमी, ज्याकमी आदि देखि बाराहीका अनुयायी तमाम भक्ति भाव कमीहरू, सहकर्मीहरू यी गरिमा र भव्यताका संवाहकहरू हुन् । जसबाट आज यो क्षेत्रले प्रसिद्धि पाएको छ, विकास भएको छ र कायापलट नै भएको छ । यो सबै भक्तपुरबासीहरूको धार्मिक एकता, आस्था र बाराहीको कृष्ण बासलताको परिणाम हो । जसबाट विभिन्न क्षेत्रमा उदाहरणीय कार्यहरू हुँदैछन् र हुनेवाला पनि छन् । जुन कि भावी कार्यक्रमका सङ्केत पनि हुन सक्छ र उचित मूल्याङ्कनको आधार पनि मान्नुपर्छ ।

भक्तपुरको बाराही पीठ नगरको दक्षिण दिशामा पर्ने भएकोले यसलाई 'दक्षिण बाराही' भन्ने चलन छ । यसको पुष्टि दक्षिण मसान यही पीठबाट चुपिंघाटमा सारिएको भन्ने जनश्रुति र जनविश्वासबाट पनि हुन्छ । अष्टमातृका पीठ स्थापना गर्दा प्रत्येक पीठमा एउटा मसान स्थापना भएको यथार्थअनुसार यहाँ मसान हाल नहुनुबाट मसान सारिएको कुराको थप पुष्टि हुन्छ । बज्रयानीहरूले बाराहीलाई 'कार्त्तिदेवी' भनेर पूजा गरे पनि दक्षिणमा अवस्थित भएको नाताले दक्षिण बज्रबाराही भन्ने गरेको पाइन्छ । दक्षिणकाली पुग्न नसक्नेका लागि दक्षिणकालीको रूपमा पूजा गर्ने चलनअनुसार देवगृहको ठूलो मूर्ति दक्षिणकाली ध्यान अनुरूप कै भएको देखिन्छ । चापागाउँको बज्रबाराही र ठिमीको दक्षिण बाराही भईकन पनि भक्तपुरको बाराहीलाई उपर्युक्त दुवै शब्द प्रयोग गरिनु यसको महत्ता नै मान्नुपर्छ । 'याकतिदो' मा बस्नु भएकी भएर याकति अजिमा भएको छ भने भगवान विष्णुको दश अवतारमध्ये तेस्रो अवतार बराहको शक्तिको रूपमा बाराहीलाई मानी बराहको उत्पत्ति भएको क्षेत्र 'बराह क्षेत्र' पुग्न नसक्नेले यहीं मात्र दर्शन गरे पुग्ने पनि बयान सुन्नमा पाइन्छ । सप्तमातृका र अष्टमातृका दुवै गणमा संलग्न बाराही भक्तपुरको मातृसत्तात्मक समाजको अवशेषको रूपमा रही आएको 'नवदुर्गा गण नाच' नामक तान्त्रिक नाटकमा पनि मौलिक स्वरूपमा रहेको कुरा यहाँनिर प्रासंगिक मान्नुपर्छ । शक्ति सम्प्रदायमा देखा पर्ने विभिन्न मातृका गणमा देखा पर्ने एक प्रमुख मातृका बाराही देवी सृष्टि, शक्ति र सत्ताको प्रतिमूर्ति सर्वेश्वरीको रूपमा मान्ने एकातिर प्रचलन छ भने अर्कोतिर वेदकालभन्दा पहिले मातृसत्तात्मक समाजमा 'माता' नै सर्वेसर्वा भई कुलको प्रधान व्यक्तिको रूपमा रहेको तथ्य अध्ययनबाट कुलदेवता, कुल नायिका मातृका (देवी) नै रहेको कुरा अति महत्त्वपूर्ण देखिन्छ । मोहनजोड्दारो र हरप्पा सभ्यतामा देखिएको नग्न मूर्ति 'मातृका' ५ हजार वर्ष पहिलेको भएको र सप्त सिन्धुमा भएको जल प्लावनमा

१. न्हयसत्वा: को अर्थ सात सय टोल भन्ने गरिए तापनि यो भनाई ठीक छैन । किनभने भक्तपुर नगर २४ टोलको भन्ने हालसम्म मान्य भइरहेको छ । तर नगरभित्रको यो एक क्षेत्रलाई सात सय टोल मान्नु कसरी मिल्छ ? प्रश्नकै विषय हो ।

बराह भगवानले बेदको उद्धार गरेको प्रतीक स्वरूपको मूर्ति 'पृथ्वी बराह' बराह क्षेत्रमा आफ्नो थुतुनोले पृथ्वी उचाली रहेको मूर्ति र धूम बाराहीमा पनि यस्तै प्रकारको धूम मूर्तिबाट पनि बाराहीको प्राचीनता र नामाकंरणको अवधारणा बुझ्न सकिन्छ ।

मध्यकालमा मूल नगर, मूल थलो वा मुख्य बस्ती बन्नको लागि विभिन्न सम्प्रदायका देवी देवताहरूको स्थापना हुनुपर्ने विशेषताको आधारमा भक्तपुर नगरको महत्त्व, विशेषता र गरिमाको पश्चिम एवम् विकासमा बाराही पीठ र बाराही देवीको भूमिका महत्त्वपूर्ण छ । न्हयस:त्वाका जनताहरूको आराध्यदेवी मात्र नभई परिवार देवीको रूपमा नित्य विहान बाराही पीठको खोला मंगलतीर्थ (घाट) मा स्नान र बाराहीको दर्शन, भजन एवम् बेलुकी बाराही पीठको परिक्रमा र देवगृहमा दीपदान (बत्ति दिने) र भजन कीर्तन गरी आरती गर्ने परम्परा त दैनिक जीवनको अभिन्न अङ्ग नै भईसक्यो । देवगृहमा र पीठमा नैमित्तिक, वार्षिक र अन्य पूजाहरू गर्नु परम्परा र विवाह ब्रतबन्ध आदिमा पीठ पूजा, चापूजा गर्ने प्रचलन पनि जनजीवनको अभिन्न अङ्ग भइसकेको छ । यसका अतिरिक्त बिस्केट जात्रा र बडा दशैंमा हुने जात्रा पर्व पूजा त प्रख्यात नै छ । यही परिप्रेक्ष्यमा हाल बाराही पीठमा 'बाराही पीठ विकास समिति' नामक समितिले विगत केही वर्षदेखि यस क्षेत्रको विकास, संरक्षण र संबर्द्धनको जुन पवित्र कार्य गर्दै छ त्यो निकै सह्रानीय मात्र हैन त्यसले निरन्तरतासमेत पाउनुपर्छ । जसमा व्यक्तिगत मनमुतावका कुरा पर पन्छाइ दलगत राजनीतिको घेराबाट माथि उठी निस्वार्थ सेवा भावबाट काम गर्नु अति आवश्यक देखिन्छ । जसबाट यो क्षेत्रको विकासमा तगारो कहींबाट पनि हुनेछैन । पारदर्शी नीति तथा कार्यक्रम बनाई अघि बढ्दै जान पनि माथिका कुराबाट सहयोग प्राप्त हुन जाने निश्चित छ । त्यसकारणले 'बाराही पीठ विकास समिति' का लागि केही कुरा निर्देशन हुने हेतुले प्रस्तुत छ ।

### १. सामुहिक विवाह र ब्रतबन्धको आयोजना

नेवार समाजमा कन्या केटीहरूको रजस्वला पूर्व 'निर्गुण विवाह' कर्म गर्ने चलन छ, जसलाई नेवारी भाषामा 'इही' भनिन्छ ।[२] यो कर्म १ जना अथवा धेरैजना एकै ठाउँमा भेला भई सामुहिक रूपमा गर्ने (इही गर्ने) चलन छ । यसलाई अर्को शब्दमा बेलबिबाह वा सुवर्णकुमार विवाह भन्ने पनि चलन छ । यो इही कर्म नेवारहरूलाई राजोपाध्याय ब्राम्हणले गराउने प्राचीन चलन मानिन्छ । किनभने अहिलेसम्म पनि अरू थरका ब्राम्हणहरूले गराएका छैनन् र पद्धति पनि छैनन् । तर राजोपाध्यायहरूलाई ब्राम्हण नै मान्न तयार नभएका संकुचित एवम् प्रतिक्रियाबादी ब्राम्हणवादको हैकम चलाउनेहरूले गाउँघरमा र यताउति जबर्जस्ती, मनपरी रूपमा बेलबिबाह भनेर गराउन पनि थालेको देखिन्छ । केही बज्राचार्यहरूले पनि यसको नक्कल गरेका देखिन्छन् । त्यसकारण इही प्रथाको सुरुवात गर्ने राजोपाध्यायहरूलाई

२. यो निगुर्ण विवाह वा इही कर्म नेवारहरूलाई राजोपाध्याय ब्राम्हणहरूले मात्र गराई आएको एक मौलिक संस्कार हो ।

नै बाराही पीठमा 'इही' सामुहिक रूपमा गर्दा कर्म गर्न लगाउनु पर्छ । आधुनिक तडकभडकलाई निरूत्साहित गर्न र इही (निर्गुण विवाह) सामुहिक रूपमा गरे जस्तै सगुण विवाह (आज भोली चलेको स्वयंबर कर्म) पनि सामुहिक रूपमा गर्नुपर्छ । जसबाट खर्चमा न्यूनीकरण हुने मात्र हैन 'आदर्श विवाह' परम्पराको सुरुवात पनि हुनेछ । नेवार कुमार केटाहरूलाई आफ्नै घरमा पनि एकै ठाउँमा संयुक्त परिवारका धेरै जनाको ब्रतबन्ध (कयता पूजा) गर्ने चलन निकै पुरानो छ । यही कुरालाई आधार मानि बाराही पीठमा सामुहिक ब्रतबन्ध गर्नुपर्छ । जसबाट सकारात्मक सामाजिक मर्यादा कायम हुन्छ । विवाह र ब्रतबन्धका लागि गर्नुपर्ने पूर्वाङ्ग कर्म (श्राद्ध, दुसो कर्म) र पीठ पूजा, कलं वायगु आदिदेखि यज्ञ, जनाई दिनु परेपनि, कयता पूजा मात्र गर्न र स्वयंबर आदि गर्न उपयुक्त एवम् उचित पवित्र क्षेत्र बाराही पीठ हो । यसमा कसैले शंका मान्नुपर्ने अवस्था छैन ।

## २. अन्तिम संस्कारको व्यवस्था

बाराही पीठ नगर बाहिर र खोला पारी परेको क्षेत्र भएको नाताले यहाँ अन्तिम संस्कार गर्ने स्थान बनाउनु उचित देखिन्छ । किनकि यो क्षेत्रमा पहिले दक्षिण मसान भएको किवदन्ती, जनश्रुति विना आधारको हुँदैन, जसबाट दाह संस्कारको समस्या धेरै कम हुन जान्छ । मंगलतीर्थमा श्राद्ध (साम्वत्सरिक = वार्षिक श्राद्ध र पार्वण = पर्व श्राद्ध, जस्तै सोह्र श्राद्ध आदि) गर्ने चलन त प्राचीन मात्र हैन हालसम्म चलेकै छ । कोही मर्दा दश क्रिया मंगल तीर्थस्थित दक्षिणाभिमुख ताहा फलचा पछाडि गर्ने चलन बाँकी नै छ र १० औं र ११ औं दिनको दूव्यंकेगु र सोमो ल्हुयेगु पनि चलि नै रहेको सबैले देखेकै छन् । जसबाट यहाँ अन्तिम संस्कार गर्नु हुने प्रमाण प्रशस्त रहेको देखिन्छ ।

## ३. 'अध्ययन केन्द्र' को स्थापना

हिन्दू धर्म एवम् बौद्धमार्गी कर्मकाण्ड विषयक अध्ययन गर्न एक अध्ययन केन्द्र या पुस्तकालयको स्थापना गर्नु उपयुक्त देखिन्छ, जहाँ पत्रपत्रिका, किताव, धर्मशास्त्र आदि ग्रन्थहरूको संरक्षण र संबर्द्धन होस्, जसको अध्ययनबाट यो क्षेत्र मात्र नभई समस्त भक्तपुरकै जनता लाभान्वित हुनेछ । देशको धर्म, संस्कृति, इतिहास एवम् कर्मकाण्ड आदि परम्पराको जगेर्ना मात्र हैन यसको रक्षा सुरक्षा आजको आवश्यकता बन्न थालेको छ । १६ औं शताब्दीदेखि विश्वमा धर्मको नाउँमा राजनीति गर्दै राजनीतिक साम्राज्यबाद फैलाएका इशाईहरू आज हाम्रो धर्म, परम्परा, गौरव एवम् पहिचान अन्त गर्न नेपालीहरूमा व्याप्त अशिक्षा र गरिबीको फाइदा उठाउँदै छन् । धेरै नेपालीहरूलाई क्रिश्चियन धर्म मान्न बाध्य गर्दैछन् । उनीहरूसँग पैसा र अवसर प्रचूरमात्रामा छन् । जसको बलमा हजारौं मान्छे आफ्नो धर्म संस्कृति छाड्दैछन् । राष्ट्रिय स्तरमै सोच्नु पर्ने विषयलाई बाराही पीठ विकास समितिले मात्र बेवास्ता गर्ने त कुरै भएन ।

*

# नेपाली काष्ठकलामा पासुका झ्याल

नेपाली काष्ठकला विश्वप्रसिद्ध मानिएको छ । त्यसमा पनि 'झ्याल' ले महत्वपूर्ण स्थान ओगटेको पाइन्छ । किनभने मानिस जुन बेलादेखि घर बनाई बस्न जान्यो त्यस बेलादेखि नै झ्याल राखी हावा लिने चलन चलेको पाइन्छ । त्यसकारण झ्याललाई संस्कृत भाषामा 'वातायण' भनिएको छ । घरभित्र हावा छिर्नको लागि बनेको सानो प्वालदेखि लिएर ठूलो प्वाल र त्यही प्वाललाई कलात्मकता दिई कालान्तरमा विकास भएको प्रकार सबैलाई 'वातायण' भनिन्छ । छोटकरीमा भन्नु पर्दा घरभित्र हावा छिर्नको लागि बनाइएको कुनै पनि प्रकारको परिकल्पना 'झ्याल' हुन् । यसमा कलाको प्रभाव प्रारम्भ भएदेखि झ्यालको विकास भयो । जसलाई आजभोलि विभिन्न नामले चिनिन्छ । 'वातायण' को विकसित रूप झ्याल भएको छ । यो शब्द नेपाल भाषाको 'झ्या' बाट झ्याल हुन आएको मानिन्छ । नेपाली काष्ठकला विधामा कुनै पनि झ्यालविना प्रतीक विना भाव घरको कुनै तल्लामा राखिन्दैन । त्यसका केही उदाहरणहरू यसप्रकार छन् :

| | |
|---|---|
| १. छेलीझ्या | - चन्द्रसूर्य |
| २. दिष्टीझ्या | - च्यवनसुकन्या |
| ३. क्वसोझ्या | - रजोगुण |
| ४. तिकाझ्या | - मायाजाल |
| ५. त्यांखाझ्या | - त्रिगुण (सत्व, रज, तम) |
| ६. स्वपासाझ्या | - त्रिदेव (ब्रम्हा, विष्णु, महेश्वर) |
| ७. न्यापासाझ्या | - पंचायण देवता |
| ८. न्हेपासाझ्या | - सप्तऋषि |
| ९. पाचोखाझ्या | - पंचवक्त्र देवता |

माथि उल्लेखित झ्यालहरू ६, ७, ८ नं का झ्यालहरू पासुका झ्याको रूपमा प्रयोग भएको पाइन्छ । धेरै प्रकारका झ्यालहरूमध्ये 'पासुका झ्या' को केही चर्चा यो लेखनको विषय हो ।

'पासुका झ्या' एक विशेष प्रकारको ३, ५ र ७ मुखे झ्याल हो । संस्कृत भाषामा यसलाई 'पंचसूत्र झ्याल' लेखिएको पाइन्छ। पंचसूत्र भनेको पंचरंगी धागो हो । यसमा ५ प्रकारको रंगीन धागो हुन्छ जसरी पञ्चसूत्रमा ५ प्रकारका रंगीन धागो हुन्छ। त्यस्तै 'पासुका झ्या' मा पनि ५ वटा झ्यालहरू संयुक्त रूपमा गाँसिएको हुन्छ । यो ५ प्रकारका रंगको

प्रतीकका रूपमा ५ वटा गाँसिएको झ्यालको भाव 'पंचायण' देवता र पञ्चतत्त्व हुन् । यो पंचायण प्राय: सबै धर्म अन्तर्गत मत मतान्तरमा प्रचलित भएको पाइन्छ । त्यसकारण यो पंचायण देवताको प्रथा अनुसार 'पासुका झ्या' राख्ने परम्परालाई महत्त्वपूर्ण मानिएको छ र मत अनुसार नै भाव हुने कुरा विद्वानहरू एकमतले स्वीकार गर्दछन् । यसै प्रसंगमा चन्द्र बहादुर जोशीद्वारा लिखित नेपाल राजकीय प्रज्ञा प्रतिष्ठानको प्रकाशन "काठमाण्डौ उपत्यकाका कलात्मक झ्यालहरू" पुस्तकको ४७ पृष्ठमा 'पासुका झ्या' को नाम पंचबुद्ध र भाव पनि पंचबुद्ध नै लेखिएको छ । 'पासुका झ्या' भन्ने शब्द आफैमा झ्यालको नाम भईकन पनि स्थानीय नाम भनी 'पंचबुद्ध' लेख्नु आश्चर्यजनक कुरा हुन् । किनभने यसरी 'पासुका झ्या' लाई पंचबुद्ध झ्याल भन्नु 'पासुका झ्या' को अपमान गर्नु हो । साथै यसको महत्त्व पटक्कै नबुझ्नु पनि हो । यसले बुद्ध धर्मलाई पनि नराम्रो पार्ने चेष्टा गरिएको देखिन्छ । किनभने नेपालका विशेषत: भक्तपुरका बुद्धमार्गीहरू संकीर्ण छैनन् । अरू धर्मसित मेलमिलाप र समन्वय गरी उनीहरू बसेका छन् । अरू धर्मलाई पनि उचित मान्यता प्रदान गरी वास्तविकतालाई पुरै अंगिकार गरेका छन् । किनभने नेपालमा बौद्ध धर्म एउटा मात्र प्रचलित नभई अन्य धर्महरू पनि धेरै प्रचलित छन् । धेरै मत र मतालम्वीहरू पनि छन् । पासुका अर्थात पंचसूत्र सबै धर्मावलम्बीहरूलाई आवश्यक वस्तु हुन् । शैव मतको मठ, मन्दिरमा 'पासुका झ्या' राख्दा त्यसको भाव पक्ष अर्थात ५ मुखे झ्यालको प्रतीक 'शिव पंचायण' हुन जान्छ । बौद्धविहार, महाविहार आदिमा पंचबुद्ध हुन जान्छ । विभिन्न आगम निगमहरूमा तान्त्रिक मत अनुसारको भाव र प्रतीक हुन जाने कुरा निर्विवाद छ । तसर्थ उहाँ जस्तो विद्धान र प्रज्ञा प्रतिष्ठान जस्तो आधिकारिक संस्थाले यसरी भ्रामक कुरा लेखिनु शोभनीय देखिँदैन । साथै उक्त पुस्तकका प्रशस्त झ्यालका चित्रहरू समावेश भएको सन्दर्भमा 'पासुका झ्या' को एउटा पनि चित्र समावेश नहुनु शंकास्पद एवं ठूलो त्रुटि हुन गएको देखिन्छ ।

हाम्रो संस्कृतिमा पंचतत्त्व अपरिहार्य रूपमा स्थापित छन् । ५ अंकको पनि त्यतिकै अपरिहार्यता ब्याप्त छन् । बेजोडा अंकको रूपमा पनि ५ लाई लिइएको छ । त्यसकारण यो पासुका झ्या प्राय: मठ, मन्दिर, बिहार, आगम् एवं राजदरवार, भाइ भारदार तथा धनी वर्गका घरहरूमा प्रयोग भएको पाइन्छ । यो झ्याल प्रयोग हुनुको महत्त्व त पंचतत्त्व, पंचायन देवता, ५ कर्मेन्द्रिय, ५ ज्ञानेन्द्रियको प्रतीकलाई जीवन शैलीमा अर्थात काष्ठकलाको विकसित प्रविधियुक्त प्रचलन गर्ने परम्परामा नै छ । यसको प्रयोग हुनुमा अर्को कारण कम ठाउँमा धेरै प्रतिभाको विकास देखाउनु पनि मान्न सकिन्छ । अलग ५ वटा झ्याल घरमा प्रयोग गर्नु पर्दा जति स्थानको आवश्यकता पर्ने हो 'पासुका झ्या' को प्रयोगले यसमा ज्यादै नै समायोजन गरी कलात्मक प्रतिष्ठा पनि बढ्छ । तसर्थ यो पासुका झ्या आजभोलिको वैज्ञानिक युगमा पनि कम ठाउँमा धेरै राम्रो कलात्मकताको प्रदर्शन गर्न पाउने प्रविधिको रूपमा पनि अंगीकार गर्न योग्य जस्तो देखिन्छ ।

'पासुका झ्या' प्राय: जनजीवनमा प्रचलित भए अनुसार अर्थात अहिलेसम्म पाइए अनुसार ३ प्रकारको देखिन्छ ।

(१) ३ मुखे (२) ५ मुखे (३) ७ मुखे

१. **३ मुखे** – यो ३ मुखे भएपनि पासुका झ्या अन्तर्गत नै मानिन्छ । यो धेरै ठाउँमा पाइन्छ । ३ मुखेको भाव एवं प्रतीक पक्षमा - शैव मत अनुसार त्रिदेव अर्थात ब्रम्हा, विष्णु, महेश्वर हुन् र बौद्ध धर्म अनुसार त्रिरत्न अर्थात बुद्ध, धम्म, संघ हुन् ।

२. **५ मुखे** – यो ५ मुखेको व्याख्या माथि भइसकेको छ । भाव ,प्रतीकमा शैव धर्म अनुसार पंचवक्त्र सदाशिव अर्थात सद्योजात, अघोर , बामदेव , तत्पुरूष, ईशान र बौद्ध मत अनुसार अक्षोम्य ,वैरोचन, अमिताभ, रत्न सम्भव, अमोघ सिद्धि हुन् ।

३. **७ मुखे** – यो ७ मुखे पासुका झ्या कीर्तिपुर दरवारको मूल प्रवेशद्धार माथि स्थापित छ । अहिलेसम्मको अवलोकनमा अरू कतै देखिएको पाइदैन । हुन त अहिले कीर्तिपुर दरवार नाम मात्रको रहेको छ । सबै दरवार क्षेत्र निजी घर भइसकेको छ । यसमा भाव प्रतीक पक्ष ७ वायु हुन् । यो ७ वायु भन्नु नै परम्परागत विश्वास र आयुर्वेद अनुसारको ४९ वायुको संयुक्त पुञ्जको रूपमा लिइएको हो ।

यो पासुका झ्या आकारमा धेरै ठूलो हुँदैन । यसबाट कुनै पनि व्यक्ति प्राय: टाउको बाहिर पठाई हेर्न सक्ने अवस्थाको हुदैन । त्यसकारण यो झ्यालबाट बाहिर हेर्नुहुदैन भन्ने पनि चलन छ । झ्यालका विकासक्रममा यही कारणले होला विशुद्धिबाद र रहस्यबादको प्रभाव पऱ्यो । कसरी भने यो झ्यालबाट बाहिर कसैलाई डाक्नुहुँदैन भन्ने परम्परा अद्यावधि प्रचलित छ । साथै बाहिर अरू कसैले डाके पनि यो झ्याल भित्रबाट जवाफ दिनु हुदैन भन्ने एकप्रकारको बाध्यात्मक परम्परा नै चलेको कुरा प्राय: आगमहरूतिर प्रचलित नै छ । तसर्थ सर्बप्रथम घरवाट बाहिर हेर्ने र तल हेर्ने प्रयोजनका लागि बनेको झ्यालको पूर्व रूपहरूमा वातायण, गवाक्ष , अपद्धार आदिबाट बिकासक्रम चल्दै कलाकौशलको क्षेत्रमा पुग्दा सँझ्या, गा:झ्या, विमानझ्या, म्हयूखा झ्या, पलेस्वाँ झ्या आदि प्रकारहरूमा पनि यो 'पासुका झ्या' को रहस्य र अर्थ धेरै भएकाले जनजींवनमा लोकप्रिय मात्र नभई मठ, मन्दिर, आगम आदि स्थानमा अनिवार्य जस्तै हुन गएको कुरा अध्ययनवाट पुष्टि हुन आउँछ ।

हामी हावा (वायु) विना बाँच्दैनौ । त्यसकारणले हावालाई (प्राणवायु) रक्षा गरी घरमा बसि आफ्नो मतलब साध्य गर्न झ्याल पनि अनिवार्य अङ्गको रूपमा रहेको पाइन्छ । पहिले आवश्यकताको रूपमा जन्म भएको झ्याल पछि झ्याल, जाल, हुदै झ्याल अनि झ्या भएको कुरा भाषाशास्त्रीहरू बताउँछन् । यसमा कला-प्रतिभा, मनोरञ्जेन, श्रृङ्गार भाव पक्षहरू विकसित हुँदै गए । जसबाट यसमा भाषा साहित्य, अनुष्ठान, धर्म, मनोरञ्जन,

श्रृंगार तत्त्वको अभिन्न रूपमा झ्याल प्रस्तुत हुन पुग्यो । जनजीवनमा गृह निर्माण कला, वास्तुकला आदिमा त झ्यालको प्रयोग विकासक्रमको उपज नै मानिएको छ । झ्याल कला एवम् साधना हो भन्ने धारणा यहीबाट विकास भएको छ । झ्यालबाट धेरै देख्न सक्ने क्षमता विकास भयो । जसबाट नयाँ नयाँ प्रतिभाको जन्म भयो । त्यही कारणले विद्वानहरू यसरी लेख्ने गर्छन् ।

'प्रज्ञा नव नवोभेष शालिनी प्रतिभा मता' अर्थात नित्य नयाँ नयाँ भावको प्रस्फुरण गर्ने बुद्धि, प्रविधि नै प्रतिभा हो । त्यसकारण भौतिक सुख सुविधाले परिपूर्ण घर मात्र उपलब्धि हैन बरू कल्पनाले मुक्त कलापूर्ण झ्याल एउटाले नै जीवनलाई उन्मुक्त बनाई जगाई रहन्छ । भक्तपुरमा हालसम्म बाँकी रहेका 'पासुका झ्या' का स्थान परिचय र संख्या यथासंभव प्रस्तुत गरिएको छ । यो झ्यालको दायाँ बायाँ कहीं कहीं मात्र चन्द्र सूर्यको प्रतीक झ्यालहरू २ वटा 'जस्केलो' को पनि प्रयोग भएको पाइन्छ ।

**भक्तपुर नगरका पासुका झ्याका विवरण**

१. दत्तात्रय मन्दिर - तचपाल - ३ मुखे - ३ वटा काठको, साधारण
२. दथुमठ - तचपाल - ५ मुखे - १ वटा काठको, कलात्मक
३. पुलांचोतामठ - तचपाल - ३ मुखे - १ वटा काठको, कलात्मक
४. बन्देराजकुल आगम् (वानेलाय्कू) - तचपाल - ५ मुखे - १ वटा काठको, जस्केलोसहित
५. नवदुर्गा देवगृह - गछें - ३ मुखे - १ वटा काठको, साधारण
६. इन्द्रवर्त महाविहार - इनाचो - ५ मुखे - १ वटा सुनको मोलम्वा, कलात्मक
७. दीपंकर विहार (झौर वही) - गोलमढी - ३ मुखे - ३ वटा काठको, साधारण
८. विद्यापीठ आगम् - सुकुलढोका - ५ मुखे - १ वटा काठको, साधारण
९. गाहिटी आगम् - लाकुलाछें - ३ मुखे - १ वटा काठको, साधारण
१०. भैरव मन्दिर - टौमढी - ५ मुखे - १ वटा सुनको मोलम्वा, कलात्मक
११. मंपति आगम् - टौमढी, क्वाछें - ३ मुखे - १ वटा काठको, साधारण
१२. दथुबाहाछें - दथुबाहात्वा - ५ मुखे - १ वटा काठको, कलात्मक, जस्केलोसहित
१३. सापारुछें - वाहात्वा (बाहाताल) - ५ मुखे - १ वटा काठको, कलात्मक
१४. जंगम्मठ - टौमढी - ३ मुखे - १ वटा काठको, साधारण
१५. बिजुक्छे आगम् - इच्छुगल्ली - ३ मुखे - १ वटा काठको, साधारण
१६. भण्डारखाल पोखरी परिसर (चौकोट दरबार, भण्डार घर) - लाय्कू - ५ मुखे - १ वटा काठको, साधारण

१७. नायजु थरको एक व्यक्तिगत घर - खौमा - ५ मुखे - १ वटा काठको, साधारण

१८. बालाखु आगम् (मन्दिरको दायाँपट्टि) - बालाखु गणेश - ५ मुखे - १ वटा काठको, साधारण (जस्केलोसहित)

१९. दिवाकर आगम् - तुलाछें - ३ मुखे - १ वटा काठको, साधारण

२०. चतुर्वर्ण महाविहार (तधिछें बहा) - साकोठा - ३ मुखे - १ वटा काठको, साधारण

२१. थाथुवही - नपुखु क्षेत्र - ५ मुखे - २ वटा काठको, साधारण

२२. छुमा गणेश मन्दिर - चोछे - ३ मुखे - ३ वटा ढुङ्गाको, साधारण

२३. भक्तपुर तलेजु क्षेत्रभित्र (मूलचोक, बेको चोक, महादेव चोक आदि) - ५ मुखे - ३ वटा काठको, साधारण

५ मुखे - ३ वटा काठको, साधारण

५ मुखे १ वटा सुनको, मोलम्बा, जस्केलोसहित साह्रै कलात्मक

२४. तचपा मंपती (तचपाल टोल) - ५ मुखे १ वटा - काठको साधारण

२५. याछें गणेशको द्योछें (याछें टोल) - ५ मुखे १ वटा - काठको कलात्मक

प्रत्यक्ष अवलोकन, सोधपुछ र अध्ययनको आधारमा लगभग ५५ वटा जति 'पासुका झ्या' हरू भक्तपुर नगरभित्र अहिले देख्न सकिन्छ । यस अतिरिक्त अरू पनि हुन सक्छन् । ती झ्यालहरू कतै जीर्ण अवस्थामा छन् त कतै अर्कै अवस्थामा छन् । नेपालमा काष्ठकलाको क्षेत्रमा विकास मल्लकालमा चरमोत्कर्षमा पुगेको मानिन्छ । काठमाडौं उपत्यकाका ३ शहर भक्तपुर, पाटन र काठमाडौंमा अहिलेसम्म पनि मल्लकालीन काष्ठकला भव्य रूपमा देख्न पाइन्छ । पाटन दरवार, हनुमान ढोका दरवार र भक्तपुरको लाय्कू दरबार विशेषतः ५५ झ्याले दरवार, तलेजु, कुमारी चोकका काष्ठकला उल्लेखनीय एवम् सजीवताको उदाहरण नै बनेका छन् । त्यसमा विभिन्न प्रकारका झ्यालहरू र पासुका झ्या पनि समानुपातिक रूपमा बनेको पाइन्छ। यसप्रकार मल्लकालीन कलाकौशल एवं काष्ठकलाको बेजोड नमूना र तान्त्रिक विश्वासको रहस्य लुकेको 'पासुका झ्या' नेपाली काष्ठकलाको क्षेत्रमा एउटा विशिष्ट स्थान भएको कलात्मकता हो भन्नुमा अत्युक्ति नहोला ।

*

# प्रसिद्ध न्यातापोल मन्दिर

भक्तपुर नगर क्षेत्रको तमाह्री (टौमढी) नामक टोलमा न्यातपोल मन्दिर छ । यो विश्व प्रसिद्ध मन्दिर हो । यसलाई ङातापोंल्ह, ङातापोलल, न्यातपौ देग, सिद्धिलक्ष्मी मन्दिर, ५ तल्ले मन्दिर आदि नामले परिचय गर्ने पनि चलन छ । यस मन्दिरमा जगत् जननी देवी 'सिद्धिलक्ष्मी' परिवार स्थापित छ । 'सिद्धिलक्ष्मी' तान्त्रिक देवी हुन् । त्यसकारण यस मन्दिरमा नित्य पूजा, दर्शन प्रवेश आदि तान्त्रिक नियमानुसार गर्नुपर्ने परम्परा छ । तान्त्रिक दीक्षा प्राप्त नगरेका व्यक्तिहरू यस मन्दिरमा प्रवेश निषेध, यसको योग्यता र यहाँको अनुष्ठान, उपासनाको दृष्टिले गरिएको छ । जुन कि आवश्यक र विधान सम्मत पनि छ ।

५ तल्ले मन्दिर पूर्ण रूपेण भक्तपुर तलेजुको क्षेत्राधिकार अन्तर्गत पर्दछ । तलेजु भवानी र त्यहाँको धार्मिक, सांस्कृतिक एवम् प्रशासनिक गतिविधि र बन्दोबस्त मूल पुरोहित (ब्राम्हण) सहित मूल पूजारी नाइके (राजोपाध्याय), पूजारी नाइके जोशी र पूजारी नाइके कर्माचार्यको मातहतमा हुन्छ । भक्तपुर तलेजुमा प्रवेश गरेका मात्र ५ तल्ले मन्दिरको पूजारी हुन सक्छ र हुनैपर्छ । कान्तिपुर तलेजु र ललितपुर तलेजुमा 'दिगु तलेजु' को अलग्गै अस्तित्व र मन्दिरै पनि स्थापित छ । जसको पूजारी ब्राम्हण (राजोपाध्याय) नै हुनुपर्ने परम्परा छ । त्यही क्रममा भक्तपुर तलेजुको 'दिगु तलेजु' को रूपमा सिद्धिलक्ष्मी देवी स्थापना गरी पूजानुष्ठान, साधना र प्रयोग आदि गर्न योग्य एवम् उचित देवी र स्थानको समन्वय रूप आगम् (अगम् = कसैले भेद खोल्न नसक्ने) पवित्र तान्त्रिक क्षेत्र ५ तल्ले मन्दिर बनाइएको हो । किनभने तन्त्र शास्त्रअनुसार 'सिद्धिलक्ष्मी' देवी आम्नाय क्रममा पश्चिमाम्नाय मतका हुन् । तर यिनको क्षमता सबै आम्नायमा समाविष्ट भै समान फल प्रदान गर्न सक्ने 'सर्वाम्नायी' पनि सिद्धिलक्ष्मी नै हुन् ।[१] अर्थात् सबै तान्त्रिक मतालम्बीहरूले पूजा गर्नुपर्ने र गर्न हुने आराध्यदेवी सिद्धिलक्ष्मी हुन् । शत्रु नाश र देश रक्षा गर्न सक्ने विशेषता यिनको भएकोले तत्कालीन राजनीतिक परिवेश र कला क्षेत्रको विकास दुवै दृष्टिले यसको स्थापना उचित मानिएको हो । त्यसकारणले कान्तिपुर र ललितपुर दिगु तलेजुमा ब्राम्हण नै पूजारी बन्नु पर्ने नियमानुसार ५ तल्ले मन्दिर निर्माण गरी देवीको र गण परिवारको मूर्ति स्थापना गर्दा तलेजुका मूल पूजारी नाइके ब्राम्हणले नै कोटिहोम् गरी जीवन्यास र प्रतिष्था कर्म गरेको देखिन्छ । किनभने ५ तल्ले मन्दिरबारे टौमढी टोलको दाफा भजनको एक गीतमा 'विल पुरोहित यात लुंया मुकुति' भन्ने

१. पिताज्यू रत्नराज शर्माबाट प्राप्त जानकारीको आधारमा यो रहस्य पत्ता लागेको हो ।

पंक्तिबाट माथिको कुरा पुष्टि हुन्छ । वैदिक, तान्त्रिक कर्मकाण्डमा 'पुरोहित' शब्द ब्राम्हणलाई प्रयोग हुने शब्द हो र लक्षाहुति, कोटी आहुति (कोटीहोम्) आजसम्म पनि जहाँ भए पनि ब्राम्हणले मात्रै गरेको पाइन्छ । अन्य व्यक्ति र पदाधिकारीहरू त सहयोगी मात्र हुन्छन् । यही प्रचलित सिद्धान्तअनुसार ५ तल्ले मन्दिरका पूजारी पनि सुरुमा ब्राम्हण (पूजारी नाइके) तलेजुको सबै कार्यमा प्रमुख भूमिकासहित सम्मिलित हुनुपर्ने कारणले पछि तलेजुकै कर्मचार्यलाई पुजारी नियुक्ति गरी आवश्यक नीति निर्देशन दिई आफ्नो पदीय दायित्व मात्र पूरा गर्दै गए ।

किंवदन्ती- ५ तल्ले मन्दिर टौमढी टोलमा बन्नु अघि उक्त स्थान 'पक्वाँ' थरका व्यक्तिहरूको थियो । राजाले ५ तल्ले मन्दिर बनाउन उक्त स्थान अधिग्रहण गरिसकेपछि त्यसको सट्टा गोल्मढी टोलको एक चौर (ख्य) दिइयो । जसलाई 'पलिसाख्य' भनियो र कालान्तरमा अपभ्रंश हुँदै 'पलिख्य' (पलिखेल) हालसम्म पनि भन्ने चलन छ ।

अर्को एक थरी जनश्रुति अनुसार ५ तल्ले मन्दिर बनेको ठाउँको नाउँ 'भुजिंकोखा' थियो । त्यही स्थानवाचक शब्दको नाताले त्यहाँ बसेका व्यक्तिहरूलाई पनि 'भुजिंकोखा' नै भनियो । उनीहरू मल्लहरूका नातेदार नै भएकाले कुनै सट्टा भर्ना नलिई मात्र बासस्थानका लागि मात्रै ५ तल्ले मन्दिरको पश्चिमतिरको थोरै जग्गामा घर बनाई बसे र देवीलाई नित्यदर्शन, पूजा आराधना गर्ने सुअवसर प्राप्त गरे । जब टौमढी भुजिंकोखामा ५ तल्ले मन्दिरको निर्माण भए तब राजाकी एकजना प्रिय रानीले (उनी गोल्मढीकी थिएन ) गोल्मढीमा स्थापित दश महाविद्या मध्येको छिन्नमस्ता विद्या (चण्डिका द्यो, चक्राकार यन्त्ररूपी कुण्ड) सिद्धिलक्ष्मी देवी र जोर गणेश (५ तल्ले मन्दिरको नैऋत्य कोणमा) सँगै बस्न चाहेको कुरा सपनामा भन्दाखेरी सोही व्यहोरा राजालाई अनुरोध गरी छिन्नमस्ता (चण्डिका द्यो) लाई हालको टौमढी टोलबाट बाहाताल जाने बाटोको बीचमा र जोर गणेश एवम् भुवनेश्वरी विद्याको बीच र ५ तल्ले मन्दिरको नैऋत्य कोणमा ल्याई स्थापना गरियो ।

यसप्रकार टौमढी टोलमा ५ तल्ले मन्दिर स्थापना भएबाट टोलको र देशकै एक महत्त्व पूर्ण स्थान एवम् पवित्र स्थल बन्ने सौभाग्य यो टोलले प्राप्त गऱ्यो । नेपाली जीवनको अध्ययन गर्दा यो कुरा स्पष्ट हुन्छ कि उसका जीवनमा धार्मिक विधि विधान र आध्यात्मिक बादको व्यापक प्रभाव परेको छ । त्यसकारणले नेपाल प्राचीन कला र कालीगढीले पूर्ण देवी देवताका मूर्ति एवम् मन्दिरका लागि विश्व प्रसिद्ध छ । वास्तुकला र शिल्पकला (मूर्तिकला) को क्षेत्रमा नेपालले विशेष गरी भक्तपुरले धेरै वर्ष पहिलेदेखि (लिच्छवीकालदेखि) विशिष्ट एवम् मौलिक परम्परा कायम राख्दै आएको कुरा सर्वविदितै छ । जुन कि भक्तपुरका लागि मात्र नभई नेपालकै लागि गौरब हुन गएको छ । किनभने आज नेपाल विश्व सामु यही मन्दिर, मूर्ति र यहाँका वास्तुकला, शिल्पकला आदि सहितको हाम्रो संस्कृति, जनजीवनको कारणले चिनिन्छ ।

स्थानीय भाषालाई अर्थ्याउँदा 'ङा' को अर्थ ५ 'ता' को अर्थ तल्ला (छाना र पेटी दुवै भन्ने अर्थमा) पोंल्हं' को अर्थ छाना भन्ने प्रष्ट हुन आउँछ । तान्त्रिक देवी 'सिद्धिलक्ष्मी' तन्त्र शास्त्र अनुसार मुख्य देवी हुन् । यो पाँच तल्ले मन्दिरभित्र स्थापित 'सिद्धिलक्ष्मी' ३ तह ९ मुख र १८ हात भएकी, दायाँ बायाँ महाकाल भैरव र मसान भैरव एउटै ढुंगामा कुँदि बनाइएको भन्ने मान्यता छ । ३ तहका ९ मुखमध्ये सबभन्दा माथिको १ मुख चण्डी भद्रकालीको दोस्रो तहमा ३ मुख त्रिबकत्रा प्रत्यंगीराको र सबभन्दा तल तेस्रो तहमा पञ्चबक्त्र सिद्धिलक्ष्मी ५ मुखको गरी समष्टि रूपमा वेताल आसनमाथि रूद्र (महादेब) को काँधमा चढेकी देवीको रूपमा तान्त्रिक ध्यान अनुसार स्थापित भएको छ । मन्दिरको छाना ५ तल्ला, पेटी ५ तल्ला गरी जम्मा १० तल्ला बनाउनुको अर्थ यो मन्दिर १० इन्द्रियले परिपूर्ण जीवन्यास प्रदान गरी जीवन्त तुल्याएको भन्ने बुझिन्छ । मन्दिरमा टुँडालहरू जम्मा १०८ वटा छन् । जसको अर्थ १० इन्द्रिययुक्त मानिसले १०८ वटा भएको रूद्राक्ष माला घुमाई देवीको जप गर्नाले मनले चाहेको फल प्राप्त हुन्छ भन्ने हेतु खुल्न आउँछ । ५ तल्ले मन्दिरका विशेषताहरू यस प्रकार छन् :

छाना ५ तल्ला, पेटी ५ तह, मन्दिरभित्र देवी देवता पनि ५ जना, सुरक्षा कवचरूपी वाहनहरू पनि ५ प्रकारका र ४ कुनामा गरी ५ दिग् गणेश (जोर गणेश २ र ३ कुनाका ३ गरी) ले युक्त मन्दिरका धेरै विशेषताहरू छन् । मन्दिर उक्लने खुड्किला ३३ वटा (३३ कोटी देवताका प्रतीक) टुँडाल १०८ (अनुष्ठानको अभिन्न वस्तु जपमाला १०८ वटा रूद्राक्ष वा अरू चीजको प्रतीक) प्रत्येक छानाको मुनि पाखामा दलिन् ३६० वटा (१ वर्षमा ३६० दिन हुने चान्द्रमान (Lunar calender) अनुसार ने.सं. ८२२ मा मन्दिर निर्माण हुँदा राजा भूपतिन्द्र मल्लले प्रयोग गरेको पञ्चाङ्ग अनुसारको तिथी मितीको प्रतीक) मन्दिरको थाम माथि र निदालमा भित्र बाहिर गरी ६४ वटा सुन्दर मूर्तिहरू (६४ योगिनी गणको प्रतीक) बाट पनि यो मन्दिरमा प्रतीकात्मक मूर्ति, झ्याल, ढोका, तोरण, टुँडाल, छाना, पेटी, जीवजन्तु आदि धेरै कुराको भाव पक्षले पूर्ण यो मन्दिर भावात्मकता र प्रतीकात्मकता, कला र तन्त्र शास्त्र बीचको अपूर्व समन्वयको अनुपम उदाहरण हो । यत्ति धेरै उचाई माथि यो मन्दिर बनेर पनि देवीको मूर्ति भूमिमै स्थापित हुनुपर्छ भन्ने प्राचीन मान्यतालाई कायम राख्नु वा राख्न सक्नु यसको अर्को ठूलो विशेषता मान्नुपर्छ । यो ५ तल्ले मन्दिर 'सिद्धिलक्ष्मी' को मन्दिर भनि प्रख्यात भएपनि यी देवीको वास्तविक नाम (नामाकरण अनुसार) 'मन मानेश्वरी' भई दिगु तलेजु परम्पराको मूल नायिका हुनु पनि एउटा तत्कालीन समयको सैद्धान्तिक पक्षबाट महत्त्वपूर्ण विशेषता हो ।[२]

---

२. नेवारी लिपिमा लेखिएको "सिद्धिलक्ष्मी प्रतिष्ठा विधि" नामक पुरानो किताव (थ्यासफू) को आधारमा र धन शम्शेरको 'कामकला रहस्य' ग्रन्थको आधारमा रहस्य र विशेषताहरूको उल्लेख गरिएको छ ।

धेरै उचाईमा भए पनि कुनै तल्लामाथि वा दलिनमाथि नभई भूमिमै मूर्ति स्थापना गरिएकै कारणबाट जति सिंढी उक्लनु पर्छ उतिकै तल देवी (मन्दिर भित्र) रहेकी छिन् भन्ने भनाइ चल्नु पनि यही भूमिमा स्थापना भएको कारणले र प्रवेशमा कठिनता भई तान्त्रिक आशय पूर्ण गर्न प्रचलित भएको मानिन्छ ।

मन्दिर सुरक्षार्थ राखिएका १ जोडी मानिस जयमल र पत्ता त्यसमाथि १ जोडी हात्ती, त्यसपछि १ जोडी सिंह, त्यसपछि १ जोडी शार्दूल (Griffen) र सवभन्दा माथि सिंहिनी र व्याघ्रिणी गरी १ जोडी देवीहरूबाट क्रमैसँग १० गुणा शक्तिशाली र सुरक्षाको अवधारणा भन्ने बुझिन्छ । मन्दिरको ४ कुनामा ५ कोण गणेश स्थापित छन् । आग्नेय वायव्य र इशान कोणमा ३ गणेश र नैऋत्य कोणमा जोर गणेशको रूपमा अमूर्त २ गणेश गरी ५ गणेशबाट पनि सिद्धि वेष्टित भएको पाइन्छ । जसबाट पञ्च तत्त्वको प्रधान्यता हामी पाउँछौं । छाना ५ तल्ला, पेटी ५ तह, ५ गणेश, ५ जोडी सुरक्षाकर्मीहरू र मन्दिरभित्र मूर्तिहरू पनि ५ वटै भएबाट पञ्च तत्त्व मध्ये प्रत्येक तत्त्वको ५ वटा अभीष्टफल प्राप्ति तत्त्वको समष्टि रूप यो ५ तल्ले मन्दिर भक्तपुर नगरको मध्य भाग टौमढी टोलमा स्थापना गरी कोट्याहुति यज्ञ गराई आषाढ शुक्ल प्रतिपदाको दिन प्रतिस्था गरेको र त्यस उपलक्ष्यमा विभिन्न टोलका प्रजाहरूलाई भोज खुवाएको कुरा इतिहासको पानाबाट बुझिन्छ । यसका साथै प्रतापी राजा भूपतिन्द्र मल्लले ५ तल्ले मन्दिर 'नसंच्याया दथी नसें ताडाव' भन्ने दाफा भजनको गीत अनुसार ने.सं. ८२२ मा प्रतिष्था गर्न कोट्याहुति यज्ञ गर्दा निजका गुरू पुरोहित राजोपाध्याय ब्राम्हणलाई होता गरी सुनको मुकुट र पूजाआजामा सहयोगी बनि काम गर्न कर्माचार्य आचाजुलाई पनि सम्मान गरिएको थियो । तसर्थ यस्तो महत्त्वपूर्ण गौरव गाथा बोकेको पाँच तल्ले मन्दिर र सिद्धिलक्ष्मी देवीको यथार्थ कुरा लेख्दा इतिहास पूर्ण भई देवीको तपस्या गरे सरह नै हुने विश्वास गर्न सकिन्छ ।

*

# चारधाम मन्दिरको परिचय

नेपालमा लिच्छविकालीन 'स्वर्णयुग' पश्चात कला, संस्कृति र धार्मिक गतिविधिहरूको व्यवस्थित ढङ्गले विकास ने.सं. ५२८ मा जन्मेका मल्ल राजा यक्ष मल्लको समयावधिभित्र भएको पाइन्छ । जसले विशाल नेपाल अधिराज्यलाई नव निर्माण मात्र गरेन बरू भक्तपुर शहरलाई नेपालको राजधानी तुल्याई यसको राम्रो विकाससमेत गरेका थिए । जसको परिणाम स्वरूप मल्लकालीन नेपालमा भक्तपुर विकसित, सम्पन्न र कला कौशल एवम् धार्मिक गतिविधिमा उत्कृष्ट थिए भनि हामी गर्वका साथ भन्न सक्छौं ।

हाल दरवार क्षेत्र (Durbar Square) को नामले सुपरिचित लायकू दरवार इलाका अन्तर्गत चार धामको प्रतिनिधित्व हुने गरी ५ वटा मन्दिरहरू स्थापित भएको अद्यावधि विभिन्न अवस्थामा विद्यमान नै छन् । तिनीहरूमा (१) केदारनाथ (२) द्वारिकानाथ, (३) बद्रीनाथ (४) जगन्नाथ र (५) रामेश्वर छन् । मित्रराष्ट्र भारतमा पनि यिनै नामले प्रख्यात मन्दिरहरूमा प्राचीन कालदेखि आज भोलिसम्म पनि तीर्थाटन गर्न जाने परम्परा रहँदै आएको जनजीवनमा टुटेको छैन । त्यसकारण तत्कालीन समयमा भारतसम्म गई तीर्थयात्रा गर्नु भनेको खर्चिलो मात्र नभई जन्मदाको चिनो शिर चढाई, जीवन जोखिम गरी खुट्टा नै एकमात्र यातायातको साधन गरी जानुपर्थ्यो । जसवाट जनताहरूमा परेको दुःख र उनीहरूको धार्मिक आस्था र श्रद्धासुमन अर्पण गर्ने उत्कृष्ट अभिलाषा पूरा गर्न यी चार धामका मूर्ति एवम् मन्दिरहरू यथासक्य उनैको ढंगमा राजाले स्थापना गरेको हुनुपर्छ भनि इतिहासकारहरू ठोकुवा गर्छन् । यसलाई यक्षमल्लले स्थापना गरे भनि जनमानसमा विश्वास गरिन्छ तर अहिलेसम्म प्राप्त प्रमाण अनुसार यक्षमल्ल पछि कै देखिन आउँछ । तसर्थ यो विषय विद्वत् इतिहासकारहरूकै अन्वेषणको विषय हुन आउँछ ।

## १. केदारनाथ

यो मन्दिर दरवार क्षेत्रमा इच्छु गल्ली जानेबाटोको दायाँपट्टि शिखर शैलीमा ५ वटा गजुर रहेको, ईटा मात्रले बनाइएको छ । आकर्षक मन्दिरको चारैतिरको सानो मन्दिरहरूमा सुनको गजुर विद्यमान छन् भने यो मन्दिरको ४ दिशातिर सुनकै भैरव मुखाकृति १२ वटाले पनि सुन्दरताको थप प्रमाण बनेका छन् । पश्चिमतिर ढुंगाको बसाहाका साथै मन्दिरभित्र पशुपतिनाथको जस्तो ४ दिशातिर अभिमुख मुखाकृतियुक्त मुखलिंग पनि राम्रै देखिन्छ । यो मन्दिर वास्तुकला क्षेत्रमा ईटाको राम्रो नमुना (Terracota Art) मान्न सकिन्छ । यसलाई स्थानीय जनजीवनमा 'मजादेग' पनि भन्ने प्रचलन छ । चार धाममध्ये

यसको दर्शन गरिसकेपछि 'रामेश्वर' पुग्नु नपर्ने भनी वैकल्पिक रूपमा पनि दिइएको छ । यसका पूजारी पाटनका निर्मलानन्द ब्राम्हण थिए भनिन्छ ।

**२. कृष्ण मन्दिर**

यो दुईतल्ले पगोडा शैलीको मन्दिर चार धाम अन्तर्गत लिइन्छ । जसलाई जनजीवनमा कृष्ण मन्दिर या राधाकृष्ण मन्दिर भन्ने चलन छ । गुठी संस्थानको लगत दर्तामा यसलाई गोपीनाथ चारकिल्ला गुठी अन्तर्गत लेखिएको छ । यसका पुजारी लेखक स्वयम् भएकाले यो मन्दिरको अलि लामो वर्णन गरिन्छ । २ तल्ले पेटी पूर्वाभिमुख मन्दिरको प्रवेशद्वारको दायाँ बायाँ चारवटा सिंहका मूर्तिहरू छन् र मन्दिर अगाडि अग्लो ढुंगाको खम्बामाथि दायाँ हात खण्डित भएको गरूड स्थापित छ । मन्दिरभित्र चारहात भएको चक्र, गडा र बाँसुरीयुक्त महाविष्णु ध्यानको कृष्ण र दायाँ बायाँ सत्यभामा र राधा गोपिनीको भेषमा दुई ढुंगाका गरी तीन मूर्तिहरू अवस्थित छन् । मन्दिरको पहिलो र दोस्रो तल्लाका टुँडालहरूमा षोडशमातृका र बाल्यकालदेखि स्वर्गारोहणसम्मको कृष्ण चरित्रका मूर्तिहरू आकर्षक ढंगले कुँदिएका छन् । प्रवेशद्वारको माथि ने.सं. ८३३ अंकित ताम्रपत्र ठोकिएको छ, जसबाट यो मन्दिर राजा रणजीत मल्लको समयमा निर्माण भएको या जीर्णोद्वार गरिएको भनी अनुमान गर्न सकिन्छ । भक्तपुरमा देशव्यापी कृष्णपूजा (भाद्र कृष्ण अष्टमी) गर्ने परम्परामा यो मन्दिर छुटाउन नहुने स्थानीय विश्वास छ । कार्तिक शुक्ल पूर्णिमाको दिन हरि मन्दिरमा हलिमली प्रदर्शन गरी (नसा छायगु) चढाउने चलन अद्यावधि चलेको छ । मार्ग कृष्ण प्रतिपदाका दिन यो देवताको मूर्तिलाई सानो खट्मा राखी देश घुमाई जात्रा गर्ने चलन पनि येनकेन चलेकै मान्नुपर्छ ।

**३. बद्रीनाथ**

चार धाम अन्तर्गतको यो एकतल्ले प्रवेशद्वारतिर एउटा सानो शिखर शैलीको मन्दिर जोडिएको छ । यो बद्रीनाथलाई सबैले बद्री नारायण भनि पूजा गर्ने चलन छ । यो मन्दिर कृष्ण मन्दिरको पछाडि र बालमन्दिर (स्कुल) को अगाडि रहेको छ । प्रवेशद्वार अगाडिका ढुंगाका दुई खम्बाका बीचमा कलश आकृतिको माथि ध्यानमग्न दुई ऋषिहरू अत्री र च्यवन अंकित छन्, जसको वर्णन A.W. Macdonald ले आफ्नो ख्यातिप्राप्त पुस्तक Arts of Newar मा मुक्त कण्ठले प्रशंसा गरी यो चित्रलाई समावेश गरिएको अध्ययन क्रमबाट ज्ञात हुन आएको छ ।

**४. जगन्नाथ**

यो एकतल्ले जस्ताले छाएको मन्दिर श्री पद्म हाईस्कुलको प्रवेशद्वार अगाडि र दरबार क्षेत्र पस्ने खौमा ढोकासँगै रहेको छ । मन्दिरभित्र दायाँबाट बायाँ क्रमशः बलभद्र (सेतो),

सुभद्रा (रातो) र कृष्ण (नीलो) रंगले मुखाकृति बनाइएको मुनष्य कदको नाक, मुख, हात, खुट्टा कुनै स्पष्ट नभएको काठका मूर्तिहरू स्थापित छन् । यसको बायाँ (उत्तर) तिर पहिलो तल्लाको पेटीमा एक ढुंगे धारा आकृतिको जल निस्कने 'हिटी मंग' रहेको छ, त्यसमुनि राजा रानी दुवैले कलश समाएको चारकुने ढुंगाको आकृति छ । जसलाई हेर्दा तस्वीर जस्तै लाग्छ । यसलाई स्व. बालकृष्ण समले आफ्नो शोधपूर्ण पुस्तक "नेपालको ललितकला" मा पोटिको द्यो (पोटे देउता) उल्लेख गर्नु भएको जानकारी यहाँनिर प्रासंगिक हुन आउँछ, तर कसैकसैले यो हिटीमंग मात्र नभई ढुंगेधारा नै हो भन्ने हिम्मत पनि गरेका छन् ।

## ५. रामेश्वर

यो रामेश्वरको शिवलिंग श्री पद्म हाईस्कुलको प्रवेशद्वारको ठीक अगाडि नै रहेको छ । यो शिवलिंगलाई चारतिर चारवटा ठूला ढुंगाका खम्वाहरू माथि बज्रले बनाइएको गुम्बजले छोपिएको छ । चार धाममध्ये यो रामेश्वर दर्शन गरेपछि केदारनाथ दर्शन गर्न नपर्ने परम्परा आजसम्म पनि हाम्रो समाजमा यथावत् चल्दै आएको देखिन्छ । जसवाट एकै ठाउँमा पाँचवटा मन्दिर स्थापना गरी चारवटाको मात्र दर्शन गरेपनि पूर्ण फल प्राप्त हुने कुरालाई हृदयगम गरी राजाले एकै ठाउँमा स्थापना गरेको हुनुपर्छ ।

चारदिशाबाट आउने चतुःविकार काम, क्रोध, लोभ र मोह नाश गरी चतुवर्गफल धर्म, अर्थ, काम, मोक्ष चारै युग सत्य, त्रेता, द्वापर र कलीयुगमा प्राप्त गर्न यो चार धाम,चार ईश्वरको परिकल्पना गरी धार्मिक, सामाजिक एवम् सांस्कृतिक जीवनमा प्रयोग नै गरिएको हाम्रो परम्परा हो । यो ज्यादै सह्राहनीय एवम् महत्त्वपूर्ण छ । त्यसकारण देशका जनताहरू टाढा-टाढा पुगी तीर्थयात्रा देव देवी दर्शन गर्न असमर्थ भएपनि या परिस्थितिले साथ नदिएपनि आफ्नै टोल शहरमा सम्वन्धित देवी देवताका मूर्ति, मन्दिरहरू स्थापना गरिएका अरू उदाहरणहरू पनि भक्तपुरमा पाइन्छ । उदाहरणका लागि भक्तपुरको प्रसिद्ध ५५ झ्याले दरबार अगाडि स्थापित यक्षेश्वर महादेवको मन्दिर काठमाडौं गौशालामा अवस्थित पशुपतिनाथको प्रतीकको रूपमा, साकोथा चतुर्वर्ण महाविहारको अगाडि पर्खालमा मनकामना माइको प्रतीकको रूपमा देवी स्थापना र हनुमानघाटमा ज्वरेश्वरको तीन टाउको तीन खुट्टा, तीन हातको मूर्ति पनि यसै प्रसंगमा उल्लेखनीय मान्नुपर्छ, त्यसकारण भक्तपुर दरबार क्षेत्र र राजनीतिक दृष्टिकोणले मात्र महत्त्वपूर्ण नभई कला संस्कृतिको क्षेत्रमा पनि निकै विकास भएको कुरा विदेशी विद्वानहरूले समेत विभिन्न पत्रपत्रिका र आफ्ना ग्रन्थहरूमा उल्लेख गरेका उदाहरणहरू प्रशस्त पाइन्छन् ।

*

# म्ह पूजाको महत्त्व

'म्ह पूजा' शब्दको शाब्दिक अर्थ देह (शरीर) पूजा हो। आत्मा विना शरीरको कुनै महत्त्व छैन त्यस्तै शरीर बिना पनि आत्माको सार्थकता रहँदैन। भौतिक र आध्यात्मिक दुवै दृष्टिकोणबाट यो 'म्ह पूजा' एवम् समन्वयात्मक उपज मान्न सकिन्छ। किनभने हामीले मान्दै आएको स्वन्ति नख: (तिहार पर्व) को लक्ष्मी पूजा वर्षान्त दिन हो। जसलाई सालतमाम वा Closing पनि भन्न सकिन्छ। वार्षिक लेनदेनको पूर्ण हिसाबकिताब सम्पन्न गरी नयाँ बाली (अनाज) घरमा भित्र्याई वर्ष दिनका लागि आवश्यक धानकुथी: (भण्डार गृह) मा थन्क्याइ शेष रहेको सम्पत्ति नगदी र जिन्सी दुवैलाई सदुपयोग गर्न त्यसैलाई लक्ष्मीको रूपमा पूजा गर्ने लक्ष्मी पूजाको आशय हो। लक्ष्मीपूजाको भोलिपल्ट 'म्ह पूजा' आफूमा शक्ति संचय गर्न कुलदेवता (मातृशक्ति) दिगुचो (पितृशक्ति) को स्मरण पूजन गरी धौ सगं (दहीको सगुण) ख्यें सगं (पञ्चमकार सगुण) ग्रहण गरी शरीररूपी मन्दिरमा आत्मारूपी देवता स्थापित गर्ने गरिन्छ। आफ्नो शरीर बलशाली नभई कुनै काम गर्न नसकिने भएकोले बल, बुद्धि एवम् शक्ति प्राप्त गर्न म्ह पूजा गर्नु पर्ने कुरा भौतिकवादी देखिन्छ भने आफूसँग भएको, आफ्नो क्षेत्रमा प्राप्त सबै कुरालाई विभिन्न प्रकारका पूजा सामग्री र खाद्य पदार्थमा प्रतिविम्बित गराई वैज्ञानिक ढंगमा त्यसको प्रयोग गर्नु भौतिक र आध्यात्मिकवादी दुवै देखिन्छ। त्यसकारण शरीरमा देवत्त्व आरोहण गराउने एक पुरानो पूजा परम्परा म्ह पूजाको महत्त्व रहेको हो।

म्ह पूजा कहिलेदेखि शुरू भयो भन्ने उत्पत्ति विषयक कुरा अन्वेषण कै विषय अन्तर्गत पर्दछ। म्ह पूजा नेपाल सम्बत् प्रारम्भको दिन सुरु भएको भन्नेहरू पनि छन् तर यसो भन्नु म्ह पूजालाई नेपाल सम्बत्‌भन्दा पुरानो नमान्नु हुन जान्छ। नेवार संस्कृतिका विद्वान लेखक बलदेव जुजुले र नेवा संस्कृति व नेवा दर्शन, पृष्ठ ३६० "म्ह पूजा शंखधर साख्वाले ऋणयुक्त सम्बत चलाएको दिन गर्नु पर्ने नभई प्राकृतिक स्थितिअनुसार म्ह पूजाको दिन नेपाल सम्बत प्रचलित हुनु अघिदेखि नव वर्षको पहिलो दिनको रूपमा मान्दै आएको देखिन्छ।" भन्ने उल्लेख गर्नु भएको छ। गोपालराज बंशावलीमा "राजा श्री राघवदेव वर्ष ६३ मास सम्बत दयकु, श्री पशुपति भट्टारके संवत्सर प्रवृत्ति कृता" लेखिनुबाट पनि नेपाल सम्बतभन्दा पहिले म्ह पूजाको दिन अर्के सम्बत् र त्यसको पहिलो दिन सुरु भएको देखिन आउँछ। इतिहास अनुसन्धानकर्ता शंकरमान राजवंशीका अनुसार "प्राचीन परम्परा अध्ययन गरी हेर्दा म्ह पूजा गर्ने चलन लिच्छविकालीन पूर्ण रूपमा हो भन्ने देखिन्छ।" लेख्नुभएको छ। नरेन्द्र देवको भक्तपुर अनन्त लिंगेश्वरको अभिलेखमा "हंश गृह द्रङ्ग'

क्षेत्रमा कार्त्तिक अमावश्याको दिन साल तमाम भई कार्त्तिक शुक्ल प्रतिपदाका दिन नयाँ साल सुरु हुन्छ ।" भन्ने उल्लेख भएबाट म्ह पूजा नेपाल सम्बतभन्दा धेरै पुरानो आफ्नै विशेषता र मौलिकता पूर्ण पूजा देखिन्छ । जसमा शरीररूपी मन्दिरमा आत्मारूपी देवता पूजा गर्न "खेलुइता" नामक विशेष प्रकारको बत्ती बाली ज्योति दर्शन गरी षोडशोपचार पूजा अनुष्ठानको माध्यमबाट भावनात्मक देह शुद्धि र आत्मा शुद्धि गरिन्छ । जुन प्राचीन नेपालको प्रशंसनीय संस्कृति हो ।

म्ह पूजालाई तिहार पर्वको बीचको पूजा र यमपञ्चकको ५ दिनको बीचमा पर्ने भनि एकापट्टि यो "स्वन्ति नख" तिहार पर्व ५ दिनको नभई ६ दिनको भन्ने प्रमाण "नेपाल वर्ष क्रिया" किताबको एक श्लोकबाट सावित हुन्छ ।

द्वादश्यांच त्रयोदश्यां चतुर्दश्यां तथैवच ।
अमावश्या प्रतिपदि द्वितीयायां क्रमाद् बुधैः ॥
गजं काकं तथा स्वानं, गोलक्ष्मीं स्वस्व देह कम ।
पूजयेत भ्रातां तन्त्रं विधिवत सर्वमानवै ॥

कार्त्तिक कृष्ण द्वादशी- हात्ती पूजा, त्रयोदशी- कागपूजा, चतुर्दशी- कुकुरपूजा, अमावश्या- गाई र लक्ष्मी पूजा, कार्त्तिक शुक्ल प्रतिपदा- म्ह पूजा (स्वदेह) र द्वितीया- दाजुभाइ पूजा गर्नुपर्ने हुन्छ । माथिको श्लोक अनुसार हात्ती पूजा लोप भइसकेको देखिन्छ । म्ह पूजा कुनै शास्त्रीय प्रमाण युक्त पूजा होइन भन्नेहरूका लागि पनि एक अकाटय प्रमाण भएको छ र म्ह पूजा नेवार शास्त्रमा मात्र होला भन्नेहरूका लागि पनि पर्याप्त जवाफ भएको देखिन्छ । यस्तो "म्ह पूजा" लाई ज्योतिषविद्, संस्कृतिविद् एवम् परम्परा जोगाउने नारा वोकेकाहरूले कुन दिन गर्नुपर्छ भन्ने बारेमा भ्रमहरू फैलाइरहेका देखिन्छन् । जसमा विभिन्न संघ संस्था लगायत, पंचाङ्ग निर्णायक समिति र विद्वानहरू एक आपसमा वादविवाद, तर्कवितर्क र आरोपप्रत्यारोपसम्म पुगेको पनि पाइयो । जसबाट हाम्रो संस्कृतिको जगेर्ना र महत्ताको कमी मात्र हुन गइ सांस्कृतिक ऱ्हास हुने संकेत मात्र पाइन्छ । त्यसकारण धर्म-संस्कृतिको नाउँमा टुक्रिएर होइन एक ढिक्का भएर अगाडि जानुपर्छ । पुरानो परम्परा, प्रमाण आदिको अध्ययन गर्नुपर्छ । म्ह पूजा कुन दिन कसरी गर्नुपर्छ भन्ने बारे एक पुष्पिका वाक्य प्रष्ट हुन्छ । "लक्ष्मी पूजा व चवदशव उकुन्हु जुयाव, न्हिनेसया चवदश देगुलि, कुम्ह ल भुजा आदित समस्तं धुनकाव वरन्हिया चवदशपूजा मयास्यं लक्ष्मी पूजानिं याङा, थ्व धुनकाव चवदश या देगुलि याय, मर्जाताथें धुनके सम्बत ६७९" यो पुष्पिका वाक्य (Colaphone) भक्तपुर तलेजुसित सम्बन्धी "थ्यासफू" को हो । यसबाट "चतुर्दशी र अमावश्या एकै दिन पर्दा चतुर्दशीको दिन कृत पूजा सकी रात्रीकृत पूजा नगरी लक्ष्मी पूजाको सम्पूर्ण विधि पूर्ण गरिसकेपछि मात्र चतुर्दशीको बाँकी पूजा विधिवत् सम्पन्न भयो, "सम्वत ६७९" अर्थ झल्कन्छ । त्यसकारण पुराना यस्तै अनेक प्रमाणहरूको खोजनीति

गरी एक सही बाटोमा जानु साँचो अर्थमा म्ह पूजाको महत्त्व बुझ्नु हुन जान्छ ।

म्ह पूजा विधान गर्न परिवारका सवै सदस्यहरूले सूची स्नान गरी सम्पूर्ण सामग्री तयार गरी साँझ पखदेखि लक्ष्मी पूजा घर, कुथीदेखि घरको झ्याल, ढोका, पिखालखु (संघार) मा बत्ती बाली दीपोत्सव सुरु गरिन्छ । अनि मात्र म्ह पूजा आरम्भ हुन्छ । सर्वप्रथम शुद्ध जल धाराले मण्डलाकार यन्त्र बनाउने, त्यस माथि तेलले पोत्ने, सो मण्डलमा रेखी, अबीरले सजाउने, नयाँ धान, चामलको धान्याञ्चल प्रतीक गरी ५ वटा थुम्का हुने गरी राख्ने । त्यसमा फूल, जजंका (जनै) धूप, वत्ती (खेलुइता) बाली सुवासित गरेर त्यस्तो मण्डलमा आफूलाई पूजा गरी देवी देवताको आव्हान गरी आत्मा र परमात्माको एकाकार भाव गरी "तसी" नामक बीजफल (विमिरा), फल रोटी चढाइन्छ । फूलको माला लगाउने, जनै लगाउने, लावा अबीर आदि छरी "फल पुष्पाभिषेक" गरिन्छ । यसपछि धौ सगं, ख्ये सगं (दही फुलको सगुण) आदि ग्रहण गरी कुलदेवताको प्रसाद सहित भोज खाई अन्तमा देवी देवता, कुमारी, छोरीचेलीलाई दान दक्षिणा दिई म्ह पूजा सम्पन्न गरिन्छ । **कसै कसैको शिर भाग प्रसाद लिई पञ्चमकार प्रयोग पनि हुन्छ ।**

भक्तपुर तलेजुमा पनि लक्ष्मी पूजाको भोलिपल्ट राजोपाध्याय ब्राम्हण र जोशी समुदाय बसी म्ह पूजा गर्ने चलन अद्यापि चलिरहेकै छ । जसमा ब्राम्हणले पहिले वेदोक्त पूजा पछि तन्त्रोक्त पूजा गरी म्ह पूजा सम्पन्न गर्ने चलन छ । यही परिप्रेक्ष्यमा भक्तपुर इपाछेंका राजोपाध्यायहरूले म्ह पूजालाई "डादिम्ब" पूजा भनि वाक्य लिनुपर्ने थ्या सफूको आधारबाट देखिन्छ । उनीहरूको प्रसाद ग्रहणमा श्रीको प्रसाद सहित पञ्चमकार रहित परम्परा चलेको पाइन्छ । म्ह पूजाको महत्त्वमा भक्तपुर तलेजुको र राजोपाध्याय ब्राम्हणको विशेषता पनि कम महत्त्वको छैन साथै थाछेंका जोशीहरूको त घरमा म्ह पूजा नगरी तलेजुमै गर्नुपर्ने र गर्दै आएको पनि एक महत्त्व कै विषय हो ।

म्ह पूजा सवै नेपालीको पूजा होइन । यद्यपि नेवार संस्कार अन्तर्गत काठमाडौंका एक तुलाधर समूह, पाटन महाद्योननीका राजोपाध्याय ब्राम्हण समूह आदिको म्ह पूजा गर्नु पर्दैन भन्ने थाहा हुन आएको छ । त्यसकारण नेपाल बहुभाषी, बहुजाति र धार्मिक समन्वय युक्त देश भएको हुनाले स्थान विशेष, लोकाचार, देशाचारलाई पनि स्थान दिने परम्परा छ । त्यसकारण यो संस्कृति मात्र जातीय रूपमा नभई देश र परिस्थिति अनुकुल पनि हुँदै आएको धेरै प्रमाण छन् । राजोपाध्याय ब्राम्हणहरू पनि जातले नेवार नभई राष्ट्रिय संस्कृतिको दृष्टिले, भाषिक दृष्टिले मात्र नेवार हुन् । त्यसैले उनीहरूको र अरूको म्ह पूजामा भिन्नता हुनु स्वाभाविक हो तर "म्ह पूजा" को भाव, महत्त्वको क्षेत्रमा सबै एक छन् र हुनु पनि पर्दछ ।

*

# नासः पूजा – एक चर्चा

'नास: द्यो' साक्षात् शिव हुन् । सिद्धिको अधिस्थाता हुन् । गीत, संगीत र नृत्य विद्यालाई व्यवहारमा हिस्सी परेको हुन नास: द्योको पूजा गर्नुपर्छ । सांगीतिक संस्कृतिको पूर्णता (जसमा स्वर, संगीत, वाद्यवादन एवम् नृत्य नाटक आदि पर्छ) को प्रतीक नै नास: द्योको पूजा हो ।

नास: द्यो नेवारी भाषामा प्रचलित शब्द हो । जसको अर्थ नृत्यनाथ, नृत्येश्वर, नाटेश्वर, नाटेश्वरी आदि मानिएको पाइन्छ । कुनै टोलमा गीत सिकाउँदा (भजन, दाफा, धलचा आदिको) बाजा गाजा सिकाउँदा र नृत्य अथवा नाटक (एकाङ्की, पूर्णाङ्की या चित्रपट) सिकाउँदा निर्माण गर्दा सम्बन्धित टोलमा रहेको नास: द्योलाई आराध्यदेवको रूपमा सिद्धिदायकको रूपमा पूजा गरी बलि दिने, मोहनी साधन आदि गर्ने परम्परा अद्यावधि हाम्रो समाजमा व्यापक रूपमा प्रचलित छ । नेवारीमा 'नास' को अर्थ हिस्सी परेको, हेर्दा सुन्दा सबैलाई राम्रो लाग्ने सम्मोहन शक्ति हो र 'द्यो' को अर्थ देव-देवता (आराध्यदेव) हुन् । तसर्थ यी आशयको लागि गर्ने पूजा नास पूजा हो ।

तर माथि उल्लेख भए झैं कतै कुनै स्थानमा सांगीतिक गतिविधि हुँदा सम्बन्धित टोलमा मात्र नास पूजा गर्ने चलन नभई व्यापक रूपमा परिक्रमा या शहरको खासखास स्थान परिक्रमा गरी नास पूजा गर्ने पद्धति पनि परम्परागत रूपमा रही आएको छ, चल्दै आएको छ । भक्तपुरमा यसरी देशव्यापी, नगरव्यापी रूपमा नास पूजा गर्ने चलन मल्ल कालदेखि नै चल्दै आएको कुरा हामी इतिहास अन्वेषणबाट थाहा पाउँछौं । यद्यपि यो चलन कान्तिपुर र ललितपुरमा पनि व्यापक रूपमा नचलेको होइन । मल्लकालमा राजा महाराजाहरू गीत, संगीत र नृत्यका धेरै शौकिन हुन्थे । उनीहरू दरबारमा नाटक खेलाएर हेर्ने मात्र गर्दैनन् बरू कहिलेकाहीं आफै पनि कलाकारको रूपमा भाग लिएको कुरा त नेपाल इतिहासमा मल्लकालीन विशेषताहरू मध्ये एक नै बन्न पुगेको हामी पाउँछौं । मनोरञ्जन मात्र गर्दा पनि धार्मिक अनुष्ठान विना नगर्ने चलन निश्चित रूपमा एउटा मौलिक परम्परा नै मान्न सकिन्छ । भक्तपुर नगरमा नास: द्यो र हैमा: द्यो यत्रतत्र प्रशस्त छरिएर रहेका छन् । जसको गणना गाऱ्हो पनि छ अर्काको घरमा, चोकमा, छिंडी वा कतै माथिल्लो तल्लासम्म जानु खतरा पनि भएकोले पुरानो लिखत् एउटा प्रस्तुत छ ।

यहाँ १०० वर्षभन्दा पहिले भक्तपुरमा नास पूजा परिक्रमा गर्दाको एक टिपोट विवरणसहित यसप्रकार छ -

१. **चोछें नास** - चोछें टोलमा खिख्वाहरूको घर पछाडि चोकमा एक तल्ले मन्दिरमा विराजमान ।

२. **खिछें टोल** - खिछें गल्लीबीच षाटो छेउ रहेको इनार नजिक वायव्य कोणया कुनामा ।

३. **मुलाछें नास** - भोलाछेबाट मुलाछें जाने बाटोको बीच भागमा भित्रपट्टि चोकमा २ वटा भिन्न नासप्वा छन् ।

४. **याताछें नास** - याताछें टोलमा बाटोको छेउ भई एक तल्ले भव्य मन्दिरमा विराजमान पित्तलको पाटाले छाएको ।

५. **सुजमाही नास** - सूर्यमढी पाटीको पछाडि भित्र चोकमा एक तल्ले मन्दिरमा जुन ठाउँलाई नासकुलां पनि भनिन्छ ।

६. **झतापो नास** - सूर्यमढी टोलबाट माहेश्वरी घाट जाने बाटोको बीच पाटीमा जहाँ नवदुर्गाको घंगला लल्हाय कर्म गरिन्छ ।

७. **नासचा नास** - इनाचो टोलमा बाटोको छेउमै डबलीसहित एक तल्ले भव्य मन्दिरमा चूडामणि गजुरले शोभायमान ।

८. **लालाछें नास** - लालाछें र सुकुलढोका बीचमा बिजुक्छेहरूको चोकमा ।

९. **तुलाछें नास** - तुलाछे टोल त्रिपुरसुन्दरी पीठको अग्र भागको पाटीमा गणेशसँग अवस्थित ।

१०. **टिवुक्छें नास** - क्वाछें र टिवुक्छेंबीच गल्लीभित्र ।

११. **नलिवि नास** - हालसम्म पत्ता नलागेको । त्यसैले स्थान परिचय गर्न सकिएको छैन । खोजीकै विषय ।

१२. **भेलुख्य नास** - योसिं खेलमा बिस्केट जात्राको 'बिश्वध्वज' लिगों उठाउने स्थानको दायाँतिर भित्र पोडे टोलमा एकतल्ले मन्दिरमा ।

१३. **तमाही नास** - टौमढी टोलको आकाश भैरव स्थान मन्दिरको पीठ मान्ने स्थानमा रहेको नास प्वा, जसको अगाडि भैरवका सानो मूर्ति पनि स्थापित छ ।

१४. **भोत्या बहा नास** – इच्छुबाट पूर्व स्वाँमला गल्लीमा दैवज्ञहरूको भोला बाहा छिंडीमा अवस्थित २ वटा नासप्वा ।

१५. **नासमना नास** – नासमना टोल स्थित मंगलेश्वर महादेवको शिखर शैलीको मन्दिरको दक्षिणतिर टाँसिएको अर्कै सानो शिखर शैलीको मन्दिरमा । हाल यो सानो मन्दिरको अवशेष मात्र रहेको छ । जहाँ त्रिगुणात्मकताको प्रतीक ३ वटा नासप्वाहरू छन् ।

१६. **तपालाछी नास** – तपालाछी टोलमा मानन्धरहरूको घरको चोकमा ।

१७. **खौमा बहा नास** – खौमाबाट लाछिचा हुँदै कोलाछें जाने बाटोबाट पश्चिमभित्र कर्मीहरूको चोकको कुनामा ।

१८. **दुवासि बहा नास** – इन्द्रायणी देवगृहको अघिल्तिर गल्लीभित्र कर्मीहरूकै चोकको कुनामा यहाँ पनि ढुङ्गाको २ नासप्वा छन् ।

१९. **बिलाछें नास** – भक्तपुर दरबार चोकस्थित राष्ट्रिय कला संग्रहालयको प्रवेश द्वारभन्दा दायाँतिर बाटो मै रहेको । जसलाई 'कविलास नास' पनि भन्ने चलन छ । पहिले २ तल्ले छाना भएको सानो मन्दिर तर अब भुईमा ।

२०. **इपाछें नास** – वडा नं. १३ लास्कुढोका टोलका श्री रत्नराज शर्मा राजोपाध्याय ज्यूको नीजि घर चोकमा अवस्थित । जसलाई हनुमां ग्वाच्च पनि भनिन्छ ।

यी माथि उल्लेखित सबै नास: द्योहरू अमूर्त रूपमा छन् । अर्थात कतै पनि मूर्ति छैन । त्रिकोणाकार प्वाल मात्र रहेको पाइन्छ । प्वाल पनि १, २ र ३ वटा गरी भिन्न रूपमा पाइएको छ । एकनास कतै छैनन् । अमूर्त रूप स्थापना गर्नुमा भाव पक्षको प्रधानता पाइन्छ । किनभने नास: द्यो भक्तपुरमा कतै गणेशको रूपमा त कतै विश्वकर्मा, भीमसेन, हनुमान र भैरवको रूपमा पनि पुजिन्छ ।

नास पूजाको साथमा हैमा पूजा, चोतानास पूजा गर्ने पनि चलन छ । नास: द्यो शिव हुन् भने हेमा शक्ति (हैमवती) पार्वती हुन् भन्ने परम्परा छ । त्यसकारण यो अमूर्त रूपको व्याख्या व्यापक छ ।

यो नास पूजा परिक्रमा गर्दा टोल, शहर नै संयुक्त भई सम्हे वजि, वलि पूजा, वाजा गाजासहित पूजा परिक्रमा गरी सिद्धि प्राप्ति गर्ने चलन चलिरहेकै छ र चलि नै रहने पनि छ । 'काव्येषु नाटकम् रम्यं' भन्ने पूर्वीय नाटक परम्परामा रम्यता, सिद्धि र आकर्षणको संयुक्त प्राप्तिका लागि नास पूजा एक अपरिहार्य आवश्यकता हुन गएको छ ।

*

# बत्सला मन्दिर

काठमाडौं उपत्यकाभित्र 'तीनशहर' भनेर चिनिने शहरमध्ये भक्तपुर पनि एक हो । भक्तपुर शहरको पुरानो प्रचलित नाउँ भादगाउँ हो । भक्तपुर शहरको मुख्य आकर्षण 'दरवार क्षेत्र' यहाँको कला र संस्कृतिका लागि विश्व प्रसिद्ध छ । यहाँका वास्तुकला, मूर्तिकला र काष्ठकलाको धेरै विदेशी तथा स्वदेशी विद्वानहरूले मुक्तकण्ठले प्रशंसा गरेका छन् । प्रस्तुत लेखको सन्दर्भ यही दरवार क्षेत्रमा पर्ने एउटा उत्कृष्ट आकर्षण 'बत्सला मन्दिर' को हो । यो कलात्मक मन्दिर वास्तुकलाको एक अनुपम नमूनाको रूपमा रहेको छ । यसको निर्माण ने.सं. ७९२ मा भक्तपुरका तत्कालीन राजा जगतप्रकाश मल्लले गराएको कुरा मन्दिरभित्रको अभिलेखबाट पुष्टि हुन्छ । उक्त मन्दिरभित्र मूलदेवताको पादपीठमा प्रचलित नेपाल लिपिमा लेखिएको शिलालेखको आधारमा प्राय: सबैले बत्सला मन्दिर भनिए तापनि यसलाई 'अन्नपुर्ण मन्दिर' पनि भनिन्छ । यहाँ नित्यपूजा र वार्षिक पूजा गर्दा नृत्यनाथ भनि पूजा गर्ने चलन छ । यो बत्सला मन्दिरको वार्षिक पूजा मार्ग शुक्ल द्वितीयाको दिन पर्दछ । यो दिन भक्तपुरको तलेजु भवानीको मन्दिरमा 'था पूजा' नामक एक पारम्परिक पूजा अर्चना पनि गरिन्छ, जसलाई 'लोह देग था पूजा' भन्ने चलन छ । यो मन्दिरलाई कृष्ण मन्दिर र कसैले दुर्गा मन्दिर पनि भन्दछन् भने भक्तपुरका बासिन्दाहरू बीच लोह देग (ढुङ्गाको मन्दिर) नामले चिरपरिचित छन् ।

यो बत्सला मन्दिर शिखर शैलीमा ढुङ्गैढुङ्गा प्रयोग गरी बनाइएको छ । यस मन्दिरको पेटी र तल्लाहरू दुवै तीन तीनवटा छन् । दोस्रो तल्लामा चार दिशा र चारकोणहरूमा साना मन्दिरहरू आठ वटा तथा बीचमा ठूलो एक वटा गरी जम्मा नौवटा मन्दिरहरू छन् । उत्तरमा इन्द्रायणी, पश्चिममा बाराही, दक्षिणमा वैष्णवी र पूर्वमा महाकालीका आकर्षक बाह्र हात युक्त बाहनसहितको मूर्ति शोभायमान छन् । यसको माथितिर चारै कुनामा क्षेत्रपाल भैरवहरू छन् । यसभन्दा अलिमाथि चार दिशामा भित्ताबाट निस्किएका चार सिंह र सिंहको माथि चारवटा ढुङ्गाका आँखीझ्यालहरू पनि छन् । यसभन्दा माथि दिग क्षेत्रपाल, विदिग क्षेत्रपालहरू सबभन्दा माथि चुडामणि सहित गजुरमा त्रिशूल पनि साथै छन्, जसबाट यो मन्दिर 'शक्ति सम्प्रदाय' अन्तर्गतको भन्ने बुझ्न सकिन्छ ।

मन्दिरको अगाडि बायाँपट्टि एउटा फलामको घण्टा झुण्ड्याइएको छ । जसको नाम उदेग लाग्दो रूपमा 'कुकुर भुक्ने घण्टा' (Dog's Barking Bell) रहेको छ । यो घण्टा बज्दा वरिपरिका कुकुरहरू घण्टा हेर्दै रोदन स्वरमा भुक्न थाल्दछन् । नेवारी भाषामा यसलाई

खिचाखो गाँ अर्थात् कुकुर रूने र भुक्ने घण्टा भनेर भनिन्छ । यो घण्टा हाल फुटेको अवस्थामा छ ।

भूत प्रेतको भय हटाउन राजा भूपतिन्द्र मल्लले ने.सं. ८२० मा यसको स्थापना ब्राम्हणद्वारा कोट्याहुति यज्ञ गरी गरेको हो । घण्टामा उत्कीर्ण अभिलेख अनुसार ने.सं. ८२० मा भूपतिन्द्र मल्लले बत्सला मन्दिरमा राखिएको यो घण्टा बिग्रँदा पछि ने.सं. ८४१ मा रणजीत मल्लले कलशार्चन गरी जीर्णोद्वार गरेको देखिन्छ । मन्दिर अगाडिका दुईवटा सिंह, दुईवटा हात्ती पनि निक्कै आकर्षक भई मन्दिरकै शोभामा थप योगदान पुग्न गए जस्तो देखिन्छ । यसप्रकार मध्यकालीन नेपालको कला, वास्तुकलाको घर मानिएको भक्तपुर शहरलाई यो बत्सला मन्दिरको वास्तुकला र मूर्तिकलाले पूर्ण रूपमा प्रमाणित गरेको छ भन्न करै लाग्छ ।

*

# भक्तपुरका दश महाविद्याको परिचय

बेद र ब्रम्हका अतिरिक्त एक अर्के ज्ञान पनि छ भनि संस्कारलाई मानिएको देखिन्छ । त्यही सन्दर्भमा शब्दलाई सुन्ने र देख्न सक्ने सामान्य ज्ञान नै परिष्कृत रूपमा अर्थात् शब्द ज्ञान र विषय ज्ञानंको मिश्रित स्वरूप 'संस्कार' हो । आध्यात्मिक र वैज्ञानिक दृष्टिकोणमा यही संस्कारलाई नै विद्या भनिएको छ । जसको सहयोगले भविष्यको व्यवहार मार्ग निर्देश हुन्छ । यही विद्या सिद्धविद्या, महाविद्या विना अनुष्ठान संभव पनि हुँदैन ।

शक्ति उपासना अर्थात् तन्त्रशास्त्र अनुसार यी विद्याहरू १० प्रकारका छन् । मेरु तन्त्रका अनुसार तिनीहरू यसप्रकार छन् -

काली तारा महाबिद्या षोडशी भुवनेश्वरी ।<br>
भैरवी छिन्नमस्ताच विद्या धूमावती तथा ॥<br>
मातंगी सिद्ध विद्याच कथिता वगलामुखी ।<br>
एता दशामहाविद्या सर्व तंत्रेषु गोपिताः ॥

उपयुक्त श्लोक अनुसारका दश महाविद्याको उपासना गोप्य रूपमा गर्नु पर्ने शास्त्रीय मत छ । जसबाट मोक्ष प्राप्त हुने उद्घोष गरिएको हामी पाउँछौं । दश दिशाबाट रक्षा गर्न दश महाविद्या स्थापना गर्ने हाम्रो परम्परा तान्त्रिक मान्यता अनुरूप छ ।

यी दश महाविद्यारूपी देवीहरू भक्तपुर शहरमा पनि स्थापित भएका छन् र यसको पूजा, जप, ध्यान आदि गर्ने परम्परा पनि प्राचीन कालदेखि चलिआएको पाइन्छ । राजा आनन्ददेवको पालामा भक्तपुर नगरलाई तान्त्रिक एवम् सामरिक दृष्टिले व्यवस्थित गरी प्रतिस्था गर्दा अष्टमातृका, दश महाविद्या, अष्टभैरव, अष्टसिद्धि एवम् मूल देवी देवताहरूले शहर घेर्न लगाइएको कुरा इतिहास सम्मत रूपमा हामी पाउन सक्छौं । भक्तपुरमा दश महाविद्या स्थापना गर्नुमा धेरै महत्त्व एवम् रहस्यहरू प्रशस्त पाइन्छन् । तिनीहरूको क्रमिक नाम, स्थान र छोटो रहस्य प्रस्तुत गर्नु लेखको मनसाय हो ।

१. **काली** - खलाँ टोलबाट योसिँखेल जाने बाटोको छेउमा अवस्थित पाषाण चक्ररूपी 'काली' लाई स्थानीय भाषामा 'खुसी अजिमा' पनि भन्ने चलन छ । भाद्र कृष्णाष्टमीको मध्यरात्रीमा प्रादुर्भाव हुनुभएकी कालीको महानील क्रमानुसार अनुष्ठान गर्नुपर्ने शास्त्रीय मान्यता प्रचलित छ ।

२. **तारा** – चुर्पीघाट पारी नील सरस्वतीको रूपमा ताराको भीमकाय पाषाण मूर्ति स्थापित छ । चैत्र शुक्ल नवमी शनिवार प्रादुर्भाव भएकी तारा महाचीन क्रमानुसार अनुष्ठान गर्दा खुसी हुने मान्यता छ ।

३. **षोडशी** – नामले नै १६ वर्षकी पूर्ण युवावस्थाकी षोडशी महाविद्यालाई त्रिपुरसुन्दरी या सुन्दरीको नामले प्रचलित र प्रख्यात छ । तुलाछैं टोलको त्रिपुरसुन्दरी पीठको रूपमा स्थापित षोडशी माघ शुक्ल पूर्णिमाको प्रदोष कालमा प्रादुर्भाव भएकी र गन्धर्व क्रमले पूजा गर्नुपर्ने प्रचलित मान्यता छ ।

४. **भुवनेश्वरी** – टौमढी टोलमा ५ तल्ले मन्दिरको नैऋत्यकोणमा चण्डिका देवीको नजिकै पाषाण यन्त्र भव्य आकृतिमा स्थापित छ । भुवनेश्वरी महाविद्याको प्रकट भएको दिन भाद्र शुक्ल द्वादशी रविबार हो । यसको अनुष्ठान महागन्धर्व क्रमले गर्नुपर्ने परम्परा प्रचलित छ ।

५. **छिन्नमस्ता** – नामैले आश्चर्य लाग्ने छिन्नमस्ता महाविद्याको रूप पनि आश्चर्य लाग्दो नै छ । जसको अर्थ शिर काटिएकी देवी हो । टौमढी टोल ५ तल्ले मन्दिरको नैऋत्यकोणमा बाटोको बीचमै स्थापित पाषाण चक्ररूपी छिन्नमस्तालाई स्थानीय भाषामा चन्डिका द्य भन्ने चलन छ । जसको प्रादुर्भाव बैशाख शुक्ल चतुर्दशी मध्यरातमा भएको र दिव्यचीन क्रमले उपासना गर्नुपर्ने शास्त्रीय मान्यता छ । कसैले यसलाई योसिंखेल भद्रकाली पीठ अगाडि दायाँ खाल्डोमा पनि भन्ने गरेको छ ।

६. **भैरवी** – भैरवी महाविद्या टौमढी टोलबाट पलिखेल जानेबाटोमा 'भौ ध्वाखा' नामक स्थानमा अवस्थित छ । जसलाई शास्त्रीय भाषामा चण्डी भगवती र भगवती नामले स्थानीय भाषामा भन्ने चलन छ। त्रिपुर भैरवी पनि नामले प्रचलित भैरवीको प्रादुर्भाव मार्ग शुक्ल पूर्णिमाको मध्यरातमा र अनुष्ठान क्रम जीवचक्र क्रम हो ।

७. **धूमावती** – भक्तपुरमा दुरुपोद्यो (द्रौपदी) नामले प्रख्यात धूमावती टिबुक्छेंबाट चासुखेल जाने बाटोमा २ वटा पाषाण स्तनको रूपमा स्थापित छ । जेष्ठ शुक्ल अष्टमी बुधबारका दिन प्रादुर्भाव भएकी र महाधूमक्रमले पूजित हुनुपर्ने धूमावती कुचो समाएकी अति बृद्धा रूपमा ध्यान गर्ने चलन छ ।

८. **बगला** – 'बगलामुखी' नामले प्रचलित यो महाविद्या इन्द्रायणी पीठदेवीको बायाँपट्टि स्थापित छ । जसको जन्म बैशाख शुक्ल चतुर्थी शनिवार हो र अनुष्ठान गर्ने मत् सौभाग्यक्रम हो ।

९. **मार्तंगी** – भ.न.पा. वडा नं. १३ स्थित राजोपाध्याय परिवार बस्ने नवदुर्गाको उद्‌गम स्थान मानिने इपाछेंमा पर्छ । यो स्थान इपाछें आगमको उछिष्ट मार्तंगी अर्थात् 'कलंचो' को रूपमा स्थापित छ । जसको प्रादुर्भाव बैशाख शुक्ल तृतीया वृहस्पतिबार हो र राजमार्ग क्रमले अनुष्ठान गर्ने शास्त्रीय मान्यता रही आएको छ ।

१०. **कमला** – दश महाविद्याको अन्तिम महाविद्या कमला हो । जसलाई सदाशिव शक्तिको रूपमा पूजा गरिन्छ । यो भोलाछें टोलको दुगुमला भन्ने ठाउँमा 'भुखाचो' को नामले प्रचलित छ । कार्तिक कृष्ण अमाबाश्याको प्रदोष कालमा प्रादुर्भाव हुनु भएकी कमलाको पूजानुष्ठान क्रम वीर दिव्य तथा प्शुभावकक्रम हो । जसबाट शीघ्र सिद्धि प्राप्ति हुने कुरा तन्त्रशास्त्रले समेत उल्लेख गरेको पाइन्छ ।

यसप्रकार भक्तपुर नगरलाई शहरीकरण एवम् राजधानी (नेपालकै) प्रतिस्था गर्दा सुरक्षा कवचको रूपमा नगर व्यवस्थित क्रमले स्थापित दश महाविद्या देवीका पीठ स्थानहरूमा तारा बाहेक कसैको पनि मूर्ति छैन । अमूर्त रूपमा अर्थात् शारीरिक आकृति नबनाई स्थापित तान्त्रिक परम्पराका यी देवीहरू नेपालमा तन्त्रप्रधान समाज विस्तार हुँदा भनौं तान्त्रिक युग नै नेपालमा चल्दाको महत्त्वपूर्ण एवम् तान्त्रिकीकरणको ज्वलन्त उदाहरण एवम् अकाट्य प्रमाण हुन् भन्नुमा कुनै शंका छैन ।

*

# योसिंद्योबारे केही जानकारी

भक्तपुरमा प्राचीन कालदेखि चल्दै आएको जात्रामध्ये 'बिस्केट' जात्रा पनि एक हो । यो जात्रा प्राय: अन्य जात्रा जस्तो चान्द्रमान् अनुसार नभई सौरमान् अनुसार चल्ने गरेको छ । यो जात्राको प्रमुख कार्य वा आकर्षण भन्नु 'योसिंद्यो' (लिंगो उभ्याउने) को जात्रा हो । करीव ३६ हात लामो मूढा (रूख) मा २ हात राखी टाउकाको कल्पना गरी रूखका हाँगाहरूको ठूलो झाङ्ग बनाई 'हलिपता' नामक २ वटा ३२ हाते रंगीन कलापूर्ण पताकाले सुसज्जित 'योसिंद्यो' लाई विश्व ध्वजोत्थान गर्ने क्रिया अन्तर्गत विश्व ध्वज भनि 'चुपिंघाट' नजिकै योसिंगा: मा उभ्याइन्छ । सूर्य ग्रह मीनराशीमा बस्ने अन्तिम् दिन 'योसिंद्यो' उठाई भोलिपल्ट मेष संक्रान्तिका दिन ढालिन्छ । जसबाट सूर्यको १ चक्र घुम्ने क्रम समाप्त भै नयाँ क्रम सुरु हुन्छ र ज्योतिषशास्त्र अनुसार नयाँ संवत्सर आरम्भ हुन्छ । ज्योतिषशास्त्र मान्नेहरूका लागि यो नव वर्षारम्भ हो । जसवाट सबैलाई कल्याण होस् भन्ने कामना सबैले गर्नुपर्ने शास्त्र सम्मत् मान्यता छ ।

'योसिंद्यो' - विश्वनाथ हुन् । विश्वनाथ भन्नु शिव हो । नाथ सम्प्रदायले वीर शैव मत अन्तर्गत् यसलाई तान्त्रिक पूजाक्रममा 'विश्वनाथ भैरव' को रूपमा मानि आएको पाइन्छ ।[१] कसैले विश्व केतु, कसैले योगसिं, कसैले योगसिद्धि वा सिद्ध योगी भने तापनि तान्त्रिक पूजा क्रमले यो श्रीकष्ठ भैरव हो ।[२] जसको अष्टमातृका ८ जना नै शक्तिको रूपमा रहने मत अनुसार योसिंद्योलाई ८ वटा डोरीले बाँधी शक्ति प्रदान गरी त्यसैको बलमा यसलाई तानेर उभ्याइने परम्परा यसका प्रमाण हुन् । प्राचीन नेपाल भाषा अमरकोशको व्याख्याको पाण्डुलिपिमा 'योसिं' सित सम्वन्धित 'ऐसिं' को अर्थ लामो घुमाउरो काठ २ अर्को काठको बीचमा रहने (जस्तै 'भैलख:' को अँसि) भनि प्रष्ट पारिएको छ ।[३] 'योसिंद्यो' कुन देवता हुन् भन्ने प्रश्न गर्दा जवाफ वैज्ञानिक ढङ्गले दिनु उचित हुन्छ । 'योसिंद्यो' लाई 'विश्वकेतु' भन्ने पुरानो चलनको अपभ्रंश 'बिस्केट' भएको व्यापक चर्चामै वैज्ञानिकता छ । यो शब्द 'विश्व केतु' नै 'विषुव केतु' मा रहने अवसरलाई उत्सवको रूपमा यो जात्रा चलेको हो । सूर्य 'विषुवत् रेखा' मा बस्नु भनेको भूगोलशास्त्र अनुसार वैज्ञानिक रूपमा पुष्टि गर्न सकिने कुरा हो । तसर्थ यो जात्रा सौरमान् अनुसार स्थिर रही चलेको छ । जसको प्रतीक

१. श्रेष्ठ, डा. पुरूषोत्तम लोचन - भक्तपुरमा तान्त्रिक शक्तिको युग - विद्यावारिधीको शोधग्रन्थ २०५०, पृ. ९४.९५

२. भैल आचाहरूसँग भएको थ्यासफू

३. च्वसापासाबाट प्रकाशोन्मुख 'प्राचीन नेपाल भाषा शव्दकोष' को पाण्डुलिपि

स्वरूप लामो लिङ्गो उभ्याई सबैले सूर्यको गतिको ज्ञान दिन अनि विश्व शान्तिकै कामना गरी आफ्नो सामर्थ्यले भ्याए जति मेहनत गरी यो जात्रा चलाइएको देखिन्छ । सूर्य ग्रहका राजा हुन् र उसको गति प्राकृतिक एवम् वैज्ञानिक छ । जुन कि वास्तविक र अविनाशी पनि छ । अविनाशी प्रकृतिलाई पूजा गर्नु मानवीय स्वभाव हो, आवश्यकता पनि हो । जसमा अन्ध परम्पराको केही प्रभाव हुँदैन । कालान्तरमा अरू कुराको प्रभाव पर्न गई वर्तमानमा यो जात्रा र देवताको परिचय नै विकृत गरेर इतिहासकारहरूले यसलाई किंवदन्ती र जनश्रुतिभित्र खुम्च्याउन खोजिरहेको देखिन्छ । जसको भण्डाफोर गर्नु नितान्त जरूरी छ ।

'योसिंद्यो' अहिले देवताको रूपमा पुजिन्छ । माथि भनिए झैं यो विश्वनाथ भैरव, श्रीकण्ठ भैरव हो । काशी विश्वनाथ पनि होइन । दोलखा भीमसेन 'योगसिं' पनि होइन । यो जात्रा 'विसिका' जात्रा पनि होइन, विश्व मल्लको समयमा चलेको विश्व जात्रा पनि होइन । हामी नेपालीहरू 'विश्वशान्ति' चाहनेहरूको परिचायक र वैज्ञानिक पर्व मान्ने हाम्रो परम्पराको जात्रा हो ।

यसको बनावटबारे कुरा गर्दा 'योसिंद्यो' कुन कुन ठाउँमा उभ्याइन्छ भन्ने बारे विचार गर्नु आबश्यक हुन जान्छ । बुढापाकाहरूबाट प्राप्त जानकारी अनुसार भक्तपुरको योसिंखेलमा, तालाको टोलमा (गणेशध्वजको रूपमा), महालक्ष्मी पीठको अगाडि, ठिमी, सांगा, नाला, पनौति, खड्पु, टोखा, नुवाकोट र काठमाडौंमा समेत यसप्रकारको लिङ्गो उभ्याउनु पर्ने पाइएका छन् । हात हुनु र नहुनु, पताका हुनु वा नहुनु नै यसको बनावटमा भिन्नता हो । अरू कुरामा साम्यता नै छ ।

पहिले 'योसिंद्यो' आजभोलिको रूपमा दशकर्म गर्नुपर्ने, बलि पूजा गर्नुपर्ने र भैरवनाथ, भद्रकालीको रथ त्यो ठाउँमा पुऱ्याउनु पर्ने देवता थिएन तर पछि धर्ममा अन्धताले प्रभाव पारेपछि यसको पूजा विधि, क्रमहरू व्यापक भए, जटिल भए । 'योसिंद्यो' नेवार जाति विशेषको मात्र देवता होइन । विश्व शान्तिको कामना गर्ने सबैको साझा जात्रा हो । विश्वमा शान्ति, सुख र उत्पादन वृद्धिको प्रतीक यो जात्रा राष्ट्रिय मात्र नभई अन्तर्राष्ट्रिय जात्रा नै मान्नुपर्छ । हिन्दू धर्म मान्ने, ज्योतिष शास्त्र मान्ने विश्वका तमाम जन मानसको जात्रा यसलाई मान्नुपर्छ । हिन्दू संस्कृतिमा यसको ठूलो प्रभाव छ । नेपालभित्र रहने सबै नेवार हुन् भन्ने पक्षबाट विचार गर्दा यो नेवारहरूको जात्रा हो ।[४] संस्कृति, परम्पराको रूपमा बिस्केट जात्रा राष्ट्रिय चाँड हो । पूजा, बलि पूजा गरी, भोज खुवाई, एक आपसमा शुभकामनाको आदान प्रदान गरी मनाउने बिस्केट जात्राको 'योसिंद्यो' लाई स्थानीय बोलीमा 'ल्यसिंद्यो' भन्नुमा केही विचारणीय कुराहरू छन् । वंशावली, किंवदन्ती या

४. बिस्केट जात्रासित सम्बन्धित बुढापाकाहरूबाट प्राप्त जानकारी

जनश्रुतिहरूमा चाहे काशीका विश्वनाथ हुन् वा दोलखाका भीमसेन 'योगसिं' हुन् । भक्तपुरमा स्वास्नी मान्छेको जात्रा हेर्न आएका हुन् भन्ने कुरा इतिहासको रूपमा किंवदन्तीहरू आदिबाट पुष्टि हुन्छ । स्वास्नी मानिसको जात्रा भनेको 'मातृसत्तात्मक' समाजको अवशेष मान्नुपर्दछ । किनभने मातृसत्तात्मक समाज व्यवस्थामा देवी, मातृकाहरू पूजिन्छन् ।[५] जात्रा पर्व पनि स्वास्नी मानिसहरूकै मात्र हुनु स्वाभाविक हो । स्वास्नी मान्छेहरूकै पूजा स्वास्नी मान्छेले नै गरी जात्रा पनि उनीहरूले नै चलाउनु मातृसत्तात्मक समाजमा मात्र संभव छ । भैरवनाथको रथ तान्ने परम्पराभन्दा पहिले भद्रकालीको मात्र 'नकिंजु अजीमा' जात्रा हुन्थ्यो भन्ने प्रचलित छ । विभिन्न टोलमा मातृकाहरूको जात्रा पनि यसका प्रमाण हुन् । कालान्तरमा यसमा अरू देवता जस्तै भैरवहरू, गणेश आदि थपिंदै गए । जात्राले नयाँ स्वरूप लियो तर यसको मूल श्रोत 'नकिंजु अजिमा' मातृसत्तात्मक समाज कि नायिका हुन् । उनले जात्राको नियम बनाए । योगसिद्धि हुने क्षेत्र योसिंख्यमा विश्व शान्तिको, सम्बृद्धि एवम् सुस्वास्थ्य, उन्नति प्रगतिको सन्देश प्रसार गर्ने विश्व जात्रा हेर्न 'नकिंजु अजीमा' ले सबैलाई परिचालित गरे । जसमा प्रकारान्तरमा द्य थहाँ बिज्याइगु, कोहाँ विज्याइगु, ख ल्वाकेगु, त्वाचाद्य जात्रा, द्योसगं बियेगु आदि प्रक्रियाहरू थपिन्दै गए । त्यसकारण विस्केट जात्राको मूल श्रोत भक्तपुर हो । नकिंजु अजीमा यसका नायिका हुन् । मातृसत्तात्मक समाजको विकसित रूप आजको समाजमा पनि यसरी परोक्ष रूपले भए पनि बाँकी रहनु यसको उत्कृष्ट प्रमाण हुन् ।

*

५. 'राजोपाध्याय' बारे आफ्नै अध्ययनका केही वाक्यहरू

# नवदुर्गा नाच

लिखित इतिहासभन्दा पहिलेको समयलाई आदिमकाल मानिएको छ । आदिमकालमा समाजको स्वरूप पनि निश्चित पनि फरक भएको कुरालाई विद्वान इतिहासकारहरू, अनुसन्धानकर्ताहरू तथा समाजशास्त्रीहरू एकमतले मान्दछन् । त्यो समाजको स्वरूपलाई 'मातृसत्तात्मक समाज' को संज्ञा दिइएको छ । मानव सभ्यताको विकासवारे अध्ययनको क्रममा मातृकल्प, ब्रम्हकल्प र पितृकल्प क्रमैसँग विकसित हुँदै गएका कुराहरू पाइएका छन् । इतिहास तथा पुराण आदि ग्रन्थले पनि राम्ररी व्याख्या नगरेका, गर्न नसकेका कुराहरूको व्याख्या गर्ने विद्वानहरू पनि नभएका होइनन् ।

मातृसत्ताले बनेको मातृकल्पमा समाजको विकास 'विकासवादी सिद्धान्त' अनुसार भएको कुरा आधुनिक समाज र विज्ञानको गहनतम खोजीले पत्ता लगाइदियो । जुन समाज स्त्रीजातिको आधिकाधिक सामाजिक प्रभुत्वमा चलेको थियो । यसको पुष्टि हामीलाई ऋग्वेद र सिन्धुघाँटीको सभ्यताको अध्ययनले बताउँछ । (ललितपुर दोचो टोलका विद्वान श्रद्धेय मामा श्रीशनाथ शर्माज्यूको विषयगत गहनतम् व्याख्याको आधारमा । जसमा उहाँले 'आदिम मातृकल्प' गाथाको अध्ययन अन्वेषण गर्नु भएको थियो ।) सिन्धुघाँटी सभ्यता पाषाण युगबाट वर्षयुग र वर्षबाट सभ्यतामा गएको संस्कृतिको मूल थलो हो । मोहनजोड्दारो र हडप्पाका भग्नावशेषको अध्ययनबाट सिन्धुघाँटीको सभ्यतातिर व्याख्या प्रारम्भ भएको हो । ऋग्वेदमा आक्रमण गर्ने आर्यहरूको वीरताको श्रेय प्राप्त इन्द्र हुन् जो आर्य देवकुलका प्रमुख थिए । सिन्धुघाँटीका मानिसहरूलाई असुर अनार्य मानिएको छ । इन्द्रको प्रशंसा गरी वेदले उनलाई 'असुरघ्न' अर्थात् असुरहरूको नाश गर्ने र 'पुरन्दर' अर्थात 'किल्लायुक्त शहरहरू ध्वस्त गर्ने क्षमता भएको' भनि लेखेको पाइन्छ । सिन्धुघाँटीको सभ्यता इशा पूर्व १५०० वर्षसम्मको मानिन्छ । त्यसपछि मात्र आर्यहरूले अग्नि र खड्ग (बल) ले तिनीहरूको दम गरेको कुरा ऋग्वेदमा उल्लेख भएको कुरा विद्वानहरू उल्लेख गर्दछन् । 'ऋग्वेद' अनुसार अनार्य, असुर तथा दस्युहरू आर्यहरू भन्दा सुसंस्कृत थिए । शहर, किल्लाहरू बलिया थिए । धार्मिक विश्वास साह्रै उन्नत थिए । यी सबैलाई शक्तिको भरबाट दबाएर आफ्नो आफ्नो आधिपत्य कायम गरी 'आर्यावर्त देश आर्या तीर्थ आदि नामाकरण भएको पनि अध्ययनले बताउँछ । तसर्थ यसैको प्रभावले नेपालीहरू पनि देवता मान्नेहरू भएकाले आर्यहरू भएको देखिन्छ ।

यसरी मातृकल्पलाई आर्यहरूले अधिनस्थ गरी सकेपछि मात्र मातृसत्ता समाप्त भयो । यस अघि त पूर्णरूपमा समाज मातृसत्तात्मकै रहेको देखियो । मातृसत्ताको समयमा पितृत्त्व ज्ञान प्राय: थिएन । समाजमा आमा मात्र हुन्थे तर बाबु पत्तै हुँदैनथ्यो । जसले गर्दा समाजको सर्वेसर्वा बन्ने शक्ति आमाकै हातमा स्वत: पर्ने नै भयो । आमाको आदेश छोराहरूले मान्नुपर्थ्यो, सबैले मान्नु पर्थ्यो । नारी हुनाले गर्भधारण आमाले गर्थे । वाबु

त मात्र वीर्यको कारण हुन्थे । जसले गर्दा आमाको वंशलाई नै कुल मानिन्थ्यो । त्यही कुललाई हामी आजसम्म 'कुल देवता' भनि पूजा गर्छौं । त्यो कुल देवता आमा हुन् । सबै कुल देवता देवी हुन् । मातृशक्तिलाई शक्तिको पहिलो स्रोत मानि हामी कुल देवता, आगम् देवता भनेर गर्व गर्छौं ।

यही शक्तिदेवीको एक रूप हामी भक्तपुरको 'नवदुर्गा' नाचलाई पनि मान्न सक्दछौं । भक्तपुरको नवदुर्गानाचबारे इतिहासमा इतिहासकारहरू बीच मतैक्यता पाइँदैन । अझ यस्तो समाजशास्त्र र आदिमकालको अध्ययन त वैज्ञानिक ढङ्गले गरेको खास हामी पाउँदैनौं । नवदुर्गा नाच भक्तपुरको एक प्रमुख नाच मात्र नभई एक मौलिक जीवनशैलीको एक सुन्दर नमूना हो किनभने 'नवदुर्गा नाच' लाई भक्तपुरमा धार्मिक कृत्यको रूपमा पूजनीय मानिएको छ । धार्मिक रूपमा देवी देवताको रूपमा पूजाआजा गरी यसको फल प्राप्त गर्ने विधि विधानहरू प्रशस्त छन्, प्रचलित पनि अद्यावधि भईरहेको पनि छ । ती कुरा यहाँ उल्लेख गर्न खोजिएको होइन । यो नाच शास्त्रीयरूपमा नाटकको पूर्वीय सिद्धान्तअनुसार बनेको भन्न सुहाउँदैन । किनकि यसमा मुख्य भूमिका कुनै वीर पुरूषको नभई अष्टमातृका गणहरूको छ । अझ मुख्य शक्तिको स्रोत त 'महालक्ष्मी' हो जसलाई स्थानीय भाषामा 'सिफ:द्यो' भनिन्छ । महालक्ष्मी देवी आमा हुन् । अन्य गणहरू सबै स्त्री जातिकै रूपमा छन् । भैरव, श्वेत भैरव, महादेव गौण छन् । त्यसकारण यो नाच 'नायिका प्रधान' नाटक हो । नामैले पनि 'नवदुर्गा' हुँदा देवी भन्ने बोध हुन्छ । 'दुर्गति नाशिनीति दुर्गा' को परिभाषाअनुसार दुर्गति नाश गर्ने दुर्गा ९ जना र अन्य पात्रहरू रहेको 'नवदुर्गा नाच' लाई भक्तपुरमा राजा सुवर्ण मल्लको शासनकालमा चलाए भन्ने कुरा भाषा वंशावलीमा उल्लेख छ । यो नाच भक्तपुरका राजोपाध्याय ब्राम्हणहरूको प्रयत्नले तयार हुन गएको मानिन्छ । यो कुरा प्रत्येक वर्ष आश्विन शुक्ल त्रयोदशीका दिन राजोपाध्यायहरूको आगमघर चोकमा ल्याई 'मू वाहाँ' सर्वप्रथम फुकाउने र दशहराको आसपास 'जेठ महिनामा' इच्छु टोलमा 'ङा लाकेगु' गर्दा 'गुरू लितयगु' भन्ने कर्म गर्ने परम्पराबाट प्रमाणित हुन्छ । यो नवदुर्गा नाचमा प्रत्येक वर्ष जन्मदेखि मरणसम्मको सम्पूर्ण क्रियाकलाप गर्ने परम्परा एउटा आफ्नै मौलिकताले पूर्ण जीवनशैलीको उदाहरण हो । जुन कुरा अन्य देवदेवीका नाचहरूमा प्राय: पाइँदैन । त्यसकारण नवदुर्गा नाचमा भक्तपुरको तत्कालीन समाजको शास्त्रीय जीवन शैलीको छाप पनि पाइन्छ भन्न सकिन्छ ।

'इखु प्याखँ' भनिने नवदुर्गा नाचको मुख्य पात्र महालक्ष्मी हुनु, सबै क्रियाकलाप देवी पात्रहरूले गर्नु, देवी पूजामा तान्त्रिक रूपमा 'सिफ:द्यो' नै नकिं भई व्यवहारमा एक स्त्री जातिलाई नै नकिं मानि साधन गरिएको 'मोहनी' देवीगण देवघरबाट वाहिर जानुपर्दा उसैको हातले लगाई शक्ति प्रदान गर्नु आदि क्रियाकलापबाट यो 'नृत्य' क्रियामा मातृकल्प, मातृसत्तात्मक, समाजको प्रभाव परेको मान्न करै लाग्छ । तसर्थ मातृसत्ताका अवशेषको रूपमा भक्तपुरमा सवै मतालम्वीहरूले नवदुर्गालाई श्रद्धाले पूजा गर्नु पक्कै पनि मातृसत्ताकै पूजा भएको मान्नुपर्छ ।

*

# काजी भीम मल्ल

काजी भीम मल्ल तत्कालीन कान्तिपुर (काठमाडौँ) राज्यको इतिहासमा प्रसिद्ध काजी थिए । उनी राजा लक्ष्मी नरसिंह मल्लकी कान्छी छोरीका ससुरा थिए । राजा र राज्यको उन्नति गर्नु नै उसको लक्ष्य थियो । त्यसकारण उसले काजी दर्जा पाएका थिए । त्यसबेला काजी भनेको आजकलको मन्त्री सरह हुन् । पछि गएर उनी प्रधानमन्त्री पनि बन्न सफल भए ।

भीम मल्लले नेपालको उत्तरी सीमानाको तिब्बत राज्यसँग राम्रो सम्बन्ध जोडेका थिए । उनको युक्ति, बुद्धि र योग्यता देखेर राजाले हुकूम दिई उनलाई तिब्बतमा राजदूत बनाई पठाइएका थिए ।

तिब्बत (भोट) लाई कान्तिपुरको प्रभाव क्षेत्रको रूपमा स्थापित हुने अवस्थामा पुगे । पछि उनले एउटा सन्धि गरे । सन्धिअनुसार नेपाली व्यापारीहरूले तिब्बतमा स्वतन्त्रता व्यापार गर्ने अधिकार पाए । कुनै पनि मामिलामा नेपालीहरूलाई नेपालकै कानून अनुसार कारवाही गर्ने भयो । कुनै व्यापारीहरू तिब्बतमा मरेमा उसको धनसम्पत्ति नेपाल सरकारको हुने व्यवस्था भयो । तिब्बतबाट सुनचाँदी कान्तिपुर ल्याएर त्यसको टक काटी रूपियाँ, मोहर आदि मुद्रा (पैसा) बनाई तिब्बतको बजारमा चलाउने प्रचलन पनि गरे । ३२ कोठी खोल्न लगाई व्यापार बढाए । यसरी भीम मल्लले आफ्नो राज्यको अधिक उन्नतिमा ठूलो योगदान गरे ।

तर राम्रो लाभ गर्नेको उचित कदर नहुने भने जस्तै दरबारकै केही चाकडीबाज भारदारहरूले उनलाई सहन सकेनन् । राजालाई उनीहरूले 'भीम मल्ल तिब्बतबाट स्वदेश फर्केपछि आफै राजा हुन खोज्छ' भनि चुकली गरे । उनीहरूको यस कुरामा विश्वास गरी अदूरदर्शी राजा लक्ष्मी नरसिंह मल्लले काजी भीम मल्ल तिब्बतबाट फर्कनासाथ उनको प्रशंसा योग्य कार्यको कदर गरी स्यावासी दिनुको सट्टा प्राणदण्ड दिए । यसरी आफ्नो इमान्दार र निर्दोष पतिलाई मृत्युदण्ड दिएकोमा उनकी पत्नीले सती जान लाग्दा नेपालको राज्य र दरबारमा कसैको पनि विवेक नहोस् भनि सराप दिइन् । पछि भीम मल्ल निर्दोष भएको वास्तविकता बुझेपछि राजा पनि पागल भए ।

लक्ष्मी नरसिंह मल्ल पागल भएपछि उनका महत्त्वकांक्षी छोरा प्रताप मल्ल कान्तिपुर राज्यको राजा बनि आफ्नै बाबुलाई कारागारमा राखेका थिए ।

यसरी एक योग्य, कर्मठ र बुद्धिमान काजीको अन्त्य हुनाका साथै देशभक्तले दण्डको परिणति भोग्नुपर्ने परम्पराको सुरुवात जस्तै भयो । नेपालको इतिहासमा काजी (प्रधानमन्त्री) लाई सत्प्रयास्को श्राप परेको यही प्रथम घटना सम्वित भएको छ जसको प्रभाव पछि शाहकालमा पनि परेको इतिहास हामी अध्ययनबाट थाहा पाउँछौं ।

*

# माधब नारायण धलंबारे लिखत पत्रहरू

माघ महिनामा माघस्नान, माघ ब्रत, माघ दान आदि कार्यहरू प्रचलित र शास्त्र सम्मत् छन् । तद्नुरूप भक्तपुरमा माघ ब्रत गर्ने चलन चलेको निकै पुरानो देखिन्छ । जसलाई स्थानीय भाषामा "माघ धलं" भन्ने चलन छ । यो धलं भक्तपुरको प्रख्यात तीर्थस्थल "हनुमान घाट" मा गर्ने चलन पनि उत्तिकै पुरानो देखिन्छ । हनुमान घाट स्थानीय भाषामा "खोंह्व" नामले प्रसिद्ध छ । यो माघ ब्रत माघ महिना भरी चल्ने "मासाब्धिक ब्रत" हो । यो मल्ल कालमा सुरु भएको देखिन्छ । सुरु देखिनै 'राजोपाध्याय' पदबीधारी ब्राम्हणहरूले यो ब्रत सुरु गराइ हालसम्म पनि चलिरहेको देखिन्छ । माधव नारायणको ब्रतोपासना, देश यात्रा, परिक्रमा र यसका परिष्कृत विधान सम्मत पूजा आजा, नियमहरू भक्तपुरमा व्यापक प्रचार-प्रसार भई आफ्नो इलाका भित्र व्याप्त भएको प्रमाण स्वरूप साँखुमा[1] सम्म फैलिइएको कुरा प्रकारान्तरमा बुझ्न सकिन्छ ।

प्रत्येक महिनामा फरक फरक नामका नारायणलाई पूजा गर्ने हाम्रो परम्परा अनुसार "माघे माधव नामकम्" भन्ने श्लोकांश भनाईवाट माघ महिनामा माधव नारायणको पूजा गर्ने प्रचलन भएको र महत्त्व बढ्न गई धलंको रूपमा पुगेको कुरा कम महत्त्वको होइन । राजादेखि सर्वसाधारणलाई धर्म ब्रत गराइ आएको प्रमाण स्वरुप माघ ब्रत विधि र विधानका थ्यासफु एवं सम्बन्धित लिखत पत्रहरू, पुष्पिका वाक्यहरू आजसम्म पनि मेरो घर परिवारमा राजोपाध्याय ब्राम्हण भएको नाताले नै बाँकी भईरहेको हो । त्यसमध्येका २ वटा लिखीतपत्र इतिहास, धर्म संस्कृतिको विषयका विविध पक्षमा अध्ययन अन्वेषण गर्ने विद्वान एवं सर्वसाधारणका लागि यसले पनि सहयोग पुऱ्याउने छ भन्ने अभिप्रायले यहाँ प्रकाशित गरिएको छ ।

यो लिखत पत्र इतिहास, धर्म संस्कृतिको क्षेत्रमा राम्रो प्रभाव पार्ने ऐतिहासिक प्रमाणको रूपमा रहेको देखिन्छ । त्यसकारण म जस्तो इतिहासका विद्यार्थीका लागि यसको प्रकाशन जिम्मेवारी पनि बन्न गयो । वास्तविक एवं वैज्ञानिक इतिहास पूर्णरूपमा तयार भएकै छैन भन्ने धेरै विद्वान एवं इतिहासकारहरूको स्पष्टोक्तिलाई हृदयङ्गम गरी आफ्नो तर्फबाट यथाशक्य सहयोग गर्नु न्यायसंगत जिम्मेवारी पनि हो । तर हाम्रो समाजमा इतिहासलाई कथाको रूपमा, किंवदन्तीको भरमा, कहावत, जनधारणाको आधारमा मात्र लेख्ने

१. 'साँखु' क्षेत्र पहिले भक्तपुर इलाका भित्र परेको थियो । पछि भक्तपुरलाई खुम्च्याई सानो पार्ने नीति शुरू भएको देखिन्छ ।

एकथरीका छन् । अर्काथरी बंशावली, शिलाभिलेख, थ्यासफु आदि इतिहास अध्ययनका श्रोतहरू बारे ज्ञान भएकाले पनि प्रायः धेरै श्रोतहरू नखुलाई आफैले थाहा भएको, आफूसँगै मूल प्रमाण भएको जस्तो गरी लेख्ने र अर्काको भनाई, व्याख्या एवम् प्रमाणिक कुराहरू (ग्रन्थ, ताडपत्र, लिखत पत्र आदि) आफ्नो पारी गलत प्रयास गर्नेहरू पनि यदाकदा देखिएका छन् । तसर्थ त्यस्तो दुष्कर्म गर्न नपरोस् भन्ने हेतुले एक उदाहरणको रूपमा यो २ वटा लिखत पत्र यहाँ प्रस्तुत गरेको छु ।

**पहिलो लिखत पत्र**

११ हरफको ९ ईन्च लम्वाई ४ ईन्च चौडाई दुवैपट्टि हरिताल लगाई पाको कागज (म:भौं) मा नेपालाक्षर (नेवारी लिपि) मा लेखिएको छ । ने.सं. ७२२ मा माधव नारायणको नित्य पूजा गर्न र व्रत गराउन ३ घरका ब्राम्हणहरूलाई आलोपालो चलाउने बन्दोबस्त मिलाई कल्याणराजलाई जिम्मा दिएको, नारायण र लक्ष्मीको सुनको मूर्ति वनाएको, गुठी राखी आवश्यक खेत जग्गा दान गरी समाप्तिको दिन गर्नुपर्ने कामको बारेमा समेत निर्देशन गरिएको कुरा यो पहिलो लिखत पत्रमा परेको छ ।

**मूल पाठ**

१. ऊँ नमः श्री माधवाय ॥ माघ मासे शुद्धे मकर रबि गते संगमे बार भद्रेः कृत्वा श्री माघवाख्यां कन ।

२. क बिरचितां शक्ति युक्तां समूर्त्ति । श्री मन्नेपाल देशे प्रथित रबि कुले जात राज्ञां पूरोधा विप्रः

३. कल्याण राजो निज जन सहितं स्नान पात् पुण्यकीर्तिः ॥ यो माघ मास्युषसि सूर्य र राजता

४. म्र स्नानं समाचर तिचारू नदीसू वाहे । उद्धृत्य संपु पुरेषान पितृमातृ वंशान् स्वर्ग्ग प्रयात्यम

५. र देह धरो नरो ऽ सौ ॥ संवत् ७२२ माघ शुक्ल पूर्णमी ॥ न्हादोल बु रोब ८ पंजुरि ब्राम्हणसके ।

६. दूंता धर्म दने माल् पालफे कंथ यिपलाच्छे[२] पसारच्छे[३] तिप्रकोच्छे[४] फोडथं पाललायिव

७. म्हंन थ्वते देव पूजा नित्य याय माल ॥ प्रतिष्ठा कोन्हू तव च्वाप्वंगाक धर्म्मू निलोक १२१२ ॥

---

२. यिपलाच्छे – कालान्तरमा विभिन्न रूपमा परिणत भै हाल 'इपाछें' भएको देखिन्छ ।

३. पसरच्छेको पस: छें ।

४. तिप्रकोच्छें – तिवुक्छे हाल कायम छ ।

८. थ्वते श्री कल्याण देव उपाध्या[५] सन दूंता ॥ यज्ञ धर्म यातं मालको यङाथँ महं नसा पंच महा ।

९. पातक लाक मालको हंनसा साफल लाक जूरों ॥ शुभं ॥ पुन: श्री ३ सरस्वती प्रतिमा श्री

१०. कालिदास दूंता जुरों ॥ पुन: बूरो ४ यत भोके पेरे बूरो ४ वेदोल केपेर, बूरो २ बैदो ।

११. ल म्ह बू, थ्वते माधव व्रतया बुं ॥

**दोस्रो लिखत पत्र**

३१ पंक्तिको ११ इन्च लम्बाई ९ इन्च चौडाई भएको काँचो कागजमा देवनागरी लिपिमा लेखिएको छ । यसमा रणजीत मल्ल (भक्तपुरका अन्तिम् मल्ल राजा) को प्रशान्ति र अजित सिंहलाई युवराज भनि उत्तराधिकारी घोषणा गरिसकेको देखिन्छ । वीरा, भद्रा, तमसाको त्रिवेणी नजिक माधव नारायण, लक्ष्मी, सरस्वती, आफ्नो गुरु र आफ्नै पनि सालिक वनाएको, पुरानो देवप्रतिमा टौमढी टोलका तिलमाधव मन्दिरमा राखेको र माघ व्रत गराउन ब्राम्हणहरूको आलोपालोको क्रम आदि पनि दिइएको छ ।

**मूल पाठ**

१. अद्यत्यादि ॥ ॥ श्री भक्तपट्टन नगर राजधान्या निवासित श्री मन्मानेश्वरी ईस्त

२. देवता वर लब्द प्रसादित सिरोरूह सकल विद्या, पार रघु कुल वसार श्री मत्

३. राज राजा भानुवंशोत्तम श्री २ जय रणजीत मल्ल वर्म्मणा नृपात्मज मानव

४. गोत्र श्री अजीत सिंह जुवराज[६] प्रभृतिनां पद्म पुरानोक्त: श्री श्री वाल्मिकेश्वर

५. सन्निधाने वीराभद्रा तिर्थे, माघ ब्रतकृता भगवत् श्री २ माधव नारायण[७]

६. सुप्रसंना प्रतिलोका षष्ठानाधिकरण केफ: मन्वंतर वास प्रतापजित महि

७. प. लोकराजत्व व्रम्ह हत्यादि सकल पाप क्षयद्वारात् कल्प कोटि शताप

८. न्छिन्न, विष्णु लोक, वासकाम श्वर्ण लेपित, रौप्य श्री माधव नारायण लक्ष्मी

९. सरस्वति, प्रिति मां, सकेतकी सहितं स्वगुरू स्वसरीर रौप्य निर्म्मित द्वयं प्र

---

५. कल्याण देव उपाध्या - राजोपाध्याय ब्राम्हण हुन् । ने.सं. ७२२ सम्म राजोपाध्याय लेख्ने चलन नभएको जस्तो देखिन्छ । पहिले नामको पछाडि देव शब्द जोडी उपाध्या (उपाध्याय) मात्र लेख्ने चलन रहेको भने पुष्टि हुन्छ ।

६. जुवराज = युवराज, य र ज लाई एकै मानी प्रयोग गर्ने चलन भएको पाइन्छ ।

७. श्री २ देवतालाई नभई (व्यक्ति) राजालाई प्रयोग हुने, देवतालाई श्री ३ लेखिन्छ ।

१०. तिमा तथा सकल पाप क्षय, चतुर्दस सहस्रा वच्छिन्न बैकुण्ठ वास काम

११. विदोल नाम भूमी द्विरोपनिका मग्नि चन्द्र विष्णु, दैवतानां श्री ३ माघव पर

१२. मात्मा जोति स्वरूप्र परंब्रम्ह श्री माध सुप्रीतये दानमहं सुमर्प्ययामि दत्त

१३. वान् थोते नक देव[८] दयेकं पुंरानदेव[९] श्री तिलमाधसके तस्यं विदोल वुंरो

१४. व २ तयावो श्री अजित सिंह भाजुन थव गुरूसहित थव सालीक तव्रो दि

१५. न या वाक्य थोते याङाव तवो दिन दानपत्र जुको दयेके माल (नी) जुलो

१६. सम्वत् ८४९ माघ पूर्णिमास संकल्प याक जुल

१७. साल सम्वत् १८५१ श्रावण वदि ८ रोज १ -

१८. माघ देउको पालो २ थेगान गरिदियाको लेषा

१९. सम्वत् ८९० कृष्णभाजुको - १ सम्वत् ९०३ घंजु भाजुको - १

२०. सम्वत् ८९१ फंपि भाजुको - १ सम्वत् ९०४ फंपि भाजुको - १[१०]

२१. सम्वत् ८९२ धंजु भाजुको - १ सम्वत् ९०५ फंपि भाजुको - १

२२. सम्वत् ८९३ धनभाजुको - १ सम्वत् ९०६ जुजुचाको - १

२३. सम्वत् ८९४ चुचामैजुको - १ सम्वत् ९०७ ध्वंम्हा भाजुको - १

२४. सम्वत् ८९५ धंजुभाजुको - १ सम्वत् ९०८ धधंभाजुको - १

२५. सम्वत् ८९६ धनभाजुको - १ सम्वन् ९०९ भाजु जुजुको - १

२६. सम्वत् ८९७ फंपि भाजुको - १ सम्वत् ९१० चुचामैजुको - १

२७. सम्वत् ८९८ भाजु जुजुको - १ सम्वत् ९११ चुचामैजुको - १

२८. सम्वत् ८९९ फंपि भाजुको - १ सम्वत्-९१२ धनजुजुको - १

२९. सम्वत् ९०० विष्णुदेवको - १ सम्वत् ९१३ धन जुजुको - १

३०. सम्वत् ९०१ धनभाजुको - १ सम्वन् ९१४ धनजुजुको - १

३१. सम्वत् ९०२ चुचामैजुको - १

---

८. नक देव - नयाँ देवताको प्रतिमा, नक शब्दको अर्थ नवीन भन्ने बुझिन्छ। नकबाट न: भएको, जस्तै नक पुखुरी = न:पुखु।

९. पुंरान देव - पुरानो देव प्रतिमा।

१०. फंपि भाजु - इपाछें वंशावलीमा खाइसीमा चोकपट्टि फर्पिङबाट धर्मपुत्र बस्न आएको देखिन्छ।

यसप्रकार माथि उल्लेखित २ वटा लिखतपत्रवाट भक्तपुरमा नेसं. ७२२ देखि हनुमान घाटमा माघ ब्रत चलेको देखिन्छ । माधव नारायण, लक्ष्मी र सरस्वतीको सुनको मूर्ति स्थापना गरी कल्याण राज देव उपाध्यालाई यसको नीति नियम बनाउन लगाई गुठी वन्दोवस्त गरी भविष्यसम्म चलोस् भन्ने उद्देश्यले खेत राखी दिएको र मकर संक्रान्ति एवं माघ पूर्णिमाका दिन गर्नु पर्ने विधि विधान बनाएको ज्यादै महत्त्वपूर्ण मान्नु पर्छ । भक्तपुर नगर तत्कालीन देश, राजा, राजगुरु पुरोहित राजोपाध्याय ब्राम्हण र सबै जनताको उत्तरोत्तर कल्याणका लागि चलाएको यो ब्रतलाई निरन्तरता दिन सके हामी सबैले "हाम्रो संस्कृति जोगाऔं" भन्ने नारा सार्थक हुनेछ ।

समग्रमा माघ धलं भक्तपुरमा स्थापनाभइ साँखु र आसपासका क्षेत्रसम्म रहेको देखिन्छ । माथि प्रस्तुत लिखतपत्रले भक्तपुरको माघ धलं कल्याण राज उपाध्या (राजोपाध्याय) देखि चल्दै आएको पाइन्छ । इपाछें, खाइसीमा चोकका ब्राम्हणहरूको यसमा ठूलो भूमिका रहेको देखिन आउँछ । आजसम्म पनि खाइसीमा चोकका ब्राम्हणहरूको नीति निर्देशनमा यो धलं (व्रत) चलिरहेकै छ ।

*

# वाने लाय्कूको छोटो चर्चा

भक्तपुरमा "लाय्कू" भन्नासाथ भक्तपुर दरबार चोक (Bhaktapur Durbar Square) भनि सहजै सबैले बुझ्छन् । "लाय्कू" शब्द "राज कुल" को अपभ्रंश भएको हो भनि भाषाशास्त्रीहरू बताउँछन् । "राजकुल" भन्नु राजाको घर वा राजा बस्ने स्थान भन्ने बोध हुन्छ । तर भक्तपुरमा "वाने लाय्कू" भनि प्रख्यात एक इतिहास प्रसिद्ध स्थान तचपाल टोलमा अवस्थित छ, जसलाई धेरैले थाहै नपाएको भन्नुमा फरक नपर्ला । किनभने यसबारे प्राय: इतिहासकारहरूको ध्यान नगएकै भन्नुपर्ने देखिन्छ र प्रसिद्ध इतिहासकारहरूले यसबारे कहीं कतै उल्लेख गरेको प्राय: नदेखिदा उहाँहरूको दृष्टिदोष भन्नु या अध्ययनको दायरा फराकिलो नभएको भनौं, यो "वाने लाय्कू" इतिहासको पानामा उपेक्षित तर गोप्य इतिहास बन्न गएकोले यसलाई प्रकाशमा ल्याउनु वाञ्छनीय लाग्नु नै यो लेखको कारण मान्नुपर्छ ।

"वाने लाय्कू"को उल्लेख Rishikeshav Raj Regmi ले आफ्नो किताब "Kathmandu, Patan and Bhaktapur" पृष्ठ ४१ मा यसप्रकारले गरेका छन् "Old Tacapāl (Tachapal) place names like Vanalayaku, or the Agam Chem housing Taleju, the titutlar goddess of Kingship, still seem to attist it. पुरानो टोलको नाउँ [1] र तलेजु भवानीको [2] भन्ने जानकारी माथिको भनाईबाट पुष्टि हुन्छ ।

यो स्थान भक्तपुरको तचपाल टोलमा प्रसिद्ध दत्तात्रय मन्दिरको बायाँपट्टि भित्र चोकमा पर्दछ । यो चोकको चारैतिर घरहरू सहितको चोकलाई अद्यावधि "वाने लाय्कू" कुनै राजाले स्थापना गरेको लाय्कू होइन । राजकुल भनेको पनि राजाको मात्र हुनुपर्छ भन्ने छैन । यो "लाय्कू" भक्तपुरका प्रसिद्ध इतिहास पुरुष भारद्वाजी "बन्हि राज राजोपाध्याय" द्वारा स्थापना भएको हो भन्ने कुरा त्यहाँ जुनसुकै काममा पनि राजाको नाम उल्लेख गर्नुको सट्टा "बन्हि राजकुल भट्टारक" भनि आजसम्म पनि वाक्य प्रयोग गरी सबै कर्मकाण्ड गरी आएको बाटै प्रष्ट हुन्छ । यद्यपि यस विषय शिलापत्र, ताम्रपत्र आदि प्रमाणहरूको खोजी गर्नु बाँकी नै छ । यसका साथै यो "लाय्कू" ने.सं. ३३७ तिर स्थापना भएको हो भनि त्यहाँ कार्यरत राजोपाध्याय ब्राम्हणहरू र आचाजुहरू (कर्माचार्यहरू) बताउँछन् । यसबारे पनि थप अनुसन्धान इतिहासविद्हरू कै काँधमा परेको देखिन आउँछ । तसर्थ निश्चित रूपमा के भन्न सकिन्छ भने यो "लाय्कू" बन्हिराज नामक ब्राम्हणले स्थापना

१. वाने लायकु
२. आगम् घर र 'राजकीय देवी'

गरेका हुन् । अरू कुनै राजा वा आचाजुहरूको आगम्को रूपमा स्थापना भएको चाहिं पटक्कै होइन भन्ने कुरा त्यहाँको वार्षिक क्रियामा, ठूलठूला पूजाआजामा ब्राम्हण नै पूजारी हुने, ब्राम्हणी नै नकिं हुने र ब्राम्हण यजमानको रूपमा वसी काम गर्नुपर्ने परम्पराले गर्दा पनि स्पष्ट हुन्छ । आचाजुहरू ब्राम्हणहरूलाई सहयोग गरी काम सम्पन्न गर्न सहायकको रूपमा मात्र रहेका छन् । उक्त वाने लाय्कू चोकको पूर्व दक्षिण अर्थात् आग्नेय कोणमा एक जल द्रोणी स्थापना भएको छ । जसको अभिलेख यसप्रकार छ - ... *स्वेष्ट देवता प्रीतिन राजोपाध्याय श्री पद्म राज न थ्व जल धेनु दानका सम्वत् (ने.सं. ७७६ वैशाख शुक्ल अक्षय तृतीया रोहिणी नक्षेत्र बृहस्पतिबार शुभम्"* । यो अभिलेखमा पनि "राजोपाध्यायहरूको स्वेष्ट देवता" भन्ने स्पष्ट उल्लेख हुनुबाट यो कसले स्थापना गरेको र कसको आगम् भन्ने कुरा घाम जत्तिकै छर्लङ्ग हुन्छ तर प्रकारान्तरमा गएर विकृति उत्पन्नभइ अव त्यस ठाउँमा इतिहास मोड्ने दुष्प्रयास भईरहेको बुझिन्छ र देखिन्छ ।

"कुल" शब्दले कुनै पनि जाति वा समूहको नामलाई जनाउँछ । उसको आगम्, दिगु द्यो सहितको परम्परागत स्थानलाई जनाउँछ । त्यस्तै यो "वाने लाय्कू पनि बन्हि राजको कुल हो । नामको पछाडि राज शब्द भएको व्यक्तिको कुलबाट "राजकुल" भएको हो न कि राजाले बनाएको वा राजाको कुलले । वाने लाय्कूलाई "बन्दे राजकुल" भनि पहिले भन्ने प्रचलन भएको हामी पाउँछौं । "सम्बत् ७५० आखाढ कृष्ण चतुर्थी कुन्हु स्वस्ति श्री ३ वन्दे राजकुल आगम् जुसके श्री मंगला ब्राम्हणीनं कोत दूता ॥" उक्त आगम्मा प्रयोग गरिने एउटा कोत (पूजाको भाँडो) मा उत्कीर्ण अभिलेखबाट पनि "वन्दे राज कुल" भन्ने स्पष्ट हुन आउँछ । यस्तै यो आगम कति पुरानो र "बन्दे" शब्द कहिलेदेखि प्रयोग भयो भन्ने कुरा "सं. ४४४ माघ शुदि ७ तिपुर प्रकार डंजोका बन्दे अट हस्यं चेत्र मासनटो सेवस्म अट छेचका श्री (जय) रुद मदल देवसन" (गोपालराज वंशावली पृष्ठ ५३, ५४ (४५ ख ५ र ४६ (क) १) बाट पनि पुष्टि हुन्छ । जसको अर्थ ने.सं. ४४४ मा (जय) रुद्रमल्लले त्रिपुरको सुरक्षार्थ पर्खाल वनाउन "बन्दे"बाट ईटाहरू ल्याई चैत्र महिनाभित्र वनाइयो भन्ने हुन्छ । यसबाट बन्दे राजकुल कति समृद्ध थियो भन्ने स्पष्ट आभाष मिल्छ ।

नेवारी भाषामा पूर्व दिशालाई "वेता" भनिन्छ । भक्तपुर शहरको पूर्वपट्टि परेको र मातृका ब्रम्हायणीलाई "वातां अजिमा" भन्ने प्रचलन भएकोले पूर्व दिशामा स्थापित आगम् (तलेजु) भन्ने अर्थ "वाने लाय्कू" वाट प्ष्टिन्छ । त्यस्तै बन्दे, वाने दुवै शब्द पनि नेवारी भाषाको "वता" शब्दबाटै प्रभावित भएको कुरा यहाँनिर उल्लेखनीय मान्नुपर्छ । भक्तपुरका सम्पूर्ण राजोपाध्याय ब्राम्हणहरूको आज पनि पूजा भाग पठाई पूजन वन्दन गर्नुपर्ने "बन्दे राजकुल" लाई "बन्हि राजकुल" पनि भन्ने गरिएको प्रमाण वर्ष क्रियाको आलोपालो चलाउने एक टिपोट इपाछे, खाइसीमा चोकका कर्मकाण्डका विद्वान स्व. मधुकुमार राजोपाध्यायले लेख्नु भएको तालिकाबाट बुझिन्छ । जुन यसप्रकार छन् -

वंन्हि राज कुल (बन्दे राजकुल) या पालो

ने.सं. १०७१ १. मनि जुजु - तुंगछें वि.सं. २००७

ने.सं. १०७१ २. नरपति राज - खाइसिमाचोक

ने.सं. १०७१ ३. हरि राज - चुचाछें

ने.सं. १०७१ ४. नंदि राज - नासचा वि.सं. २०१०

ने.सं. १०७१ ५. युग राज - महाद्यो चोक वि.सं. २०११

ब्राम्हणहरूलाई पूर्ण सहयोग गर्ने आचाजुहरूमा भुवनेश्वरी कर्माचार्य र भोगेश्वरी कर्माचार्यहरू अर्थात् खिचें र खाचुकका आचाजुहरू मात्र त्यहाँ जान पाउँछन् । नित्य पूजा गर्न कर्माचार्यहरूलाई वाली दिने गरी बन्दोवस्त गरिएको बुझिन्छ ।

अब वर्षभरिमा गर्नुपर्ने पूजा आजाको संक्षिप्त विवरण पनि सार्वजनिक गरिन्छ । वाने लाय्कू सरकारी गुठी अन्तर्गत नभई निजी गुठी अन्तर्गत भएकोले करीव १ सय रोपनी खेतको आयस्ता भए पनि गुठी संस्थानको गैर जिम्मेवारीपूर्ण क्रियाकलाप र गुठी परम्परा खतम गरी कला संस्कृति एवम् परम्परा बच्राउने खोक्रो नारा युक्त कार्य नीतिबाट जेनतेन काम चलिरहेको बुझिन आएको छ ।

१. कात्ति चह्रे (कार्तिक कृष्ण चतुर्दशी) का दिन ब्रम्हायणी पीठमा विद्यापीठ आगमका आचाजुहरूले शिराहुति यज्ञ गर्ने, पोडे जाति (पौडेल होइन) ले बोका काट्नुपर्ने र उनीहरूलाई भोज ख्वाउनु पर्ने । जसको लागि ब्रम्हायणी आसपास सबै खेतमा तरकारी जगात् र गुसिंपकोमा दाउरा जगात् लिन पाउने ।

२. दशैंमा घटस्थापना, छुंजुहरूले "घौ तय्गु" (घडी स्थापना) गर्ने, फूलपातीमा द्य कोहाँ बिज्याकेगु, प्रतिपदादेखि अष्टमीसम्म कुमारी भोजन भाग सुवाजुले तयार गरी महाजुले वाने लाय्कूको अलग्गै कुमारी पशु वहामा लगि चढाउने र नवमीका दिन आगम्मै ल्याई विशेष पूजा, भोजन गराउने र विजया दशमीका दिन द्य थहाँ बिज्याकेगु, नवदुर्गा पूजा र भैरव भोजन गराउने ।

३. दत्तात्रय मन्दिर अगाडि नवदुर्गा ङा लाकेगु गर्ने दिन वापि पाछायकेगु कर्म गर्नुपर्ने ।

४. पासा चह्रे (चैत्र कृष्ण चर्तुदशी) का दिन "चोक बलि" पूजा गर्ने ।

५. भगस्ती (भल भल अष्टमी) का दिन था पूजा (पञ्चोपचार पूजा) गर्नुपर्ने ।

६. नागपञ्चमी (श्रावण शुक्ल पञ्चमी) का दिन पुच्छा (पवित्रारोहण पूजा) गर्नुपर्ने ।

यसप्रकार वार्षिक क्रिया आदि नित्य पूजा आरती गर्नुपर्ने "बन्दे राजकुल" वाने लाय्कूको महत्त्व व्यापक भएपनि स्वार्थ लोलुपताले आज लुप्त प्राय: अवस्थामा पुगेको कटु सत्य हामी सबैको सामु छ । पूर्खाले सिर्जेको सम्पत्ति, हाम्रो कला र संस्कृति भन्ने नाराले यो लाय्कूले नव जीवन प्राप्त होस् ।

*

# लेखक परिचय



**नाम : बिनोदराज शर्मा, राजोपाध्याय**

**जन्म** : वि.सं. २०११ चैत्र १९ गते,

इपाछें, लास्कुढोका

**पिताको नाम** : रत्नराज शर्मा

**माताको नाम** : श्रीवाणी शर्मा

**शिक्षा** : इतिहासमा एम्.ए. सम्मको अध्ययन

**पेशा** : सनातन हिन्दू धर्मका कर्मकाण्ड र इतिहास-संस्कृतिको अनुसन्धान

**सल्लाहकार** : प्रोक्सीमा इण्टरनेशनल एकेडेमी, भीमसेन स्थान

**अध्यक्ष** : संचालक समिति, रोशम इङ्गलिश स्कूल, सल्लाघारी

**पूजारी** : ख्वप लायकुका ४ धाममध्ये जगन्नाथ, रामेश्वर र द्वारिका (कृष्ण मन्दिर)

**पूजारी** : इखालाखु मठ, तालाको टोल

**सल्लाहकार एवम् आजीवन सदस्य** : Students' Library

**पूर्व सम्पादक** : SL को प्रकाशन "जानकारी" पत्रिका

**संयुक्त सम्पादक** : 'भुला' नामक नेपाल भाषाको गोजी पत्रिका

— डा. बर्नहार्ड कोल्भरलाई भक्तपुरमा नेपाल भाषा सिकाउने अवसर पाएको

— थुप्रै पत्रपत्रिकाहरूमा विभिन्न विषयका लेख, कविताहरू र समीक्षात्मक लेख प्रकाशित ।